# यौनिकता र लैङ्गिकताको शब्दकोष

# यौनिकता र लैङ्गिकताको शब्दकोष

# A dictionary of Gender and Sexuality

रुक्शना कपाली ‘मिँजला’

# यौनिकता र लैङ्गिकताको शब्दकोष

यौनिकता र लैङ्गिकताको शब्दकोष

A dictionary of Gender and Sexuality

लेखक तथा प्रकाशक : रुक्शना कपाली

संस्करण : प्रथम, ११३९



प्रकाशित मिति - नेपाल सम्बत ११३९ यंला ५, 3 September 2019

**Paperback :**

**ISBN : 978-9937-0-6483-5**

Price : 150 NRS.

Published total number :

स्वःप्रकाशित

**लेखक तथा प्रकाशक** - रुक्शना कपाली, क्वयेर युवा समूह

rukshana.newa@gmail.com

# भूमिका

यौनिकता र लैङ्गिकता बारे मलाई जीवनमा धेरै अगाडी देखि रह्यो। लैङ्गिकता सम्बन्धी समाजको संकुचित परिभाषाहरूमा आफूलाई देख्न नसकेको हुनाले, यो मेरो लागि सँधै प्रश्नको विषय नै रह्यो। हाम्रो समाजमा कतिपय भावना र अभिव्यक्तहरू व्यक्त गर्न गाह्रो छ। कतिपय विषयमा कुराहरू गरिँदैन, गर्नुहुँदैन भन्ने मान्यता छ भने कतिपय विषयहरू नराम्रो हुन् वा विकृति हुन् भन्ने मान्यता छ। यस्ता सामाजिक परिभाषामा कुण्ठित विषयहरू व्यक्त गर्ने भाषाको मलाई रूची थियो।

फलतः सर्वप्रथम मैले यौनिकता र यसका विविधता बारे मेरो मातृभाषा नेपालभाषामा शब्द हुनुपर्छ भन्ने हिसाबले लागेँ। आवश्यक श्रोत व्यक्तिहरूसँग र विशेषज्ञहरूसँगको लामो सहकार्य पछि नेपालभाषामा यस बारे आधारभूत शब्द निर्माण भयो। भएका शब्दहरू खोज्दै, हराएका शब्दहरू पुनःप्रयोग गर्दै र नयाँ शब्द निर्माण गरी 'नेपालभासय् जाः व यसु सम्बन्धी खँग्वः मुना' नामक पुस्तक प्रकाशन गरेँ। यसै पनि मूलधारबात उत्पीडनमा परेको भाषा र नेवाः समाजमा पनि कुण्ठित विषयवस्तुले धेरै अप्ठ्यारा निम्त्याए। मुख्यतः यसको प्रयोग सम्बन्धी। बिस्तारी समाजिक संजालको माध्यमबाट प्रयास जारी रहँदा, यस्तै यौनिकता र लैङ्गिकता सम्बन्धी शब्दहरू खस नेपाली भाषामा पनि क्वयेर दृष्टिकोणले हेरिनु पर्छ भन्ने इच्छा आयो। खस नेपाली भाषा (पर्वते कुरा)मा यौनिकता सम्बन्धी धेरै शब्दहरू छन् पनि। सामान्य बोलीचालीको भाषाले समाजको चरित्र झल्काउँछ। जुन समाजमा यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक विविधता जसलाई क्वयेर पनि भनिन्छ, त्यसलाई स्वीकारिएको छैन, त्यो समाजहरूका भाषामा यस्ता विषयहरू गैर-मूलधार, असमावेशिकरण र असामान्यीकरण विषयका रूपमा रहन्छ। तसर्थ तीनवटै भाषामा शब्दहरूको सूची तयार पारेँ। खस नेपाली भाषामा अधिकांश शब्दहरू नवनिर्मित होइनन्, त्यसलाई खोजी गरेर सूचिकृत बनाएको हो। यसरी मेरो दोस्रो किताब "लैङ्गिकता र यौनिकता सम्बन्धी त्रैभाषिक शब्द संग्रह" छापियो। विशेष गरी यौन सकरात्मक समूह, क्वयेर समूह, महिलावादी समूह र यौनिकताका क्षेत्रमा कार्यरत संघ संथाहरूबाट प्रशंसात्मक र आलोचनात्मक टिप्पणी पाएँ।

उक्त पुस्तकको लगभग ६ महिना पछि नेपालका विभिन्न शब्दकोषमा यस शब्द र त्यसका अर्थ पनि समावेश गर्ने अभियानमा लागेँ जुन सहायम नेपाल मार्फत हामीले सुरु गर्यौँ। यसलाई हामीले अङ्ग्रेजीमा 'डिक्टिभिजम्' नाम दियौँ। डिक्टिभिजम् दौरान बिस्तारी क्वयेर क्षेत्रका केही आधारभूत शब्दको सूचिकरण गरी त्यसको अर्थ लेख्दै यता उति प्रकाशनहरूमा दिंदै गर्दा मनमा झलक्क, ल त आफ्नै शब्दकोष किन नछाप्ने भन्ने सोच आयो। त्यसपछी लागेँ आफ्नै शब्दकोष निर्माणमा। आफ्नै शब्दकोष निर्माण गर्नुको स्वन्तन्त्रता के हो भन्दा अरु व्यक्तिहरू विशेष गरी मूलधारको धारणाबाट स्वीकार्यताको आवश्यकता पर्दैन र यसको नियन्त्रण मेरो हातमा हुन्छ। त्यसैले अरु शब्दकोष प्रकाशनमा डिक्टिभिजम् गरेजस्तै बारम्बार यस्ता अवधारणाहरू बुझाइ राख्न पनि नपर्ने अनि यौनिकताका विषयलाई द्वयसांख्यात्मक (बाइनेरी) र विषमयौनिक आदर्शिकरण दृष्टिकोणले हेरिरहनु नपर्ने र यसमा आधारभूत मात्र होइन अझै विस्तृत व्यापकताका शब्दहरू समावेश गर्न सकिन्थ्यो।

यस पुस्तकमा कस्ता शब्दहरू समावेश गर्ने वा कस्ता शब्दहरू समावेश नगर्ने भन्ने बारे द्विविधा परेको थियो। समाजमा कठबोली ( स्लायङ ) वा अश्लील मानिने शब्दहरूलाई समावेश गर्ने वा नगर्ने विषयमा धेरै द्विविधा महसुस भएतापनि अन्त्यमा यो शब्दकोषको हेतु नै सामान्य मानिएको वा सामान्यता नर्म्यालिटीलाई तोड्नु हो भने

किन उल्लेख नगर्ने त भन्ने विचार आयो। यी अश्लील शब्दहरू समाजमा प्रयोग नगरिएको पनि हैन, र प्रयोगको प्रसंग र तरिकामा पनि यो शब्दको प्रभाव पनि भिन्नै हुन्छ। साथी दौंतरीहरूसँग एकदम मिलेको वा कुनै हिच्किचाहट नभएको खण्डमा यी शब्दहरू नै सामान्यतः प्रयोग गरिन्छ। अश्लीलता के हो भन्ने विषय व्यक्तिपरक रहेको र स्तरीय औपचारिक प्रयोगको भाषामा पनि दुर्व्यवहार वा कसैलाई हानि पुर्याउने वाक् गर्न नमिल्ने पनि होइन। यौनाङ्ग वा यौन सँगै जोडिएको विषय भएकाले नै चलन्चल्तीका यी शब्दहरू अश्लिल हुन पुगे।

कतिपय शब्दहरू निर्माण गर्ने प्रकृयामा म आफू भाषाविद नै त नरहेको र यो मेरो मातृभाषा पनि होइन, त्यसैले यो कामको कति वैधता हुने भन्ने मनमा प्रश्न उठ्यो। तर शब्द भनेको त कसै न कसैले सुरुवात गरेर नै हुने हो, र असामान्य मानिएका वा मूलधारमा लाञ्छित अभिव्यक्तिहरू समान्यरूपमा कुराकानी गर्न शब्दहरूको खाँचो त पर्छ नै। साथै नेपालको हाल सम्म यथापूर्व स्थितिको औपचारिक भाषा पनि रहेकाले यस भाषामा शब्दहरू हुनुले सामाजिक रूपमा अस्वीकृत कतिपय पहिचान र अभिव्यक्तिहरूका निम्ति लाभदायिक भूमीका निर्वाह गर्न सक्छ जस्तो लाग्छ। यस अर्थ मैले खस नेपाली भाषा ( पर्वते कुरा ) को श्रेष्ठतालाई समर्थन गरेको पक्कै पनि होइन। आफू यस भाषाको मातृभाषी नभएकाले विद्यालयमा पढेको औपचारिक भाषिक स्वरूपमा मात्र परिचित छु।

आफू शैक्षिक योग्यताका हिसाबले भाषाविद नभए पनि वा यस भाषाको मातृभाषी नभएपनि यौनिकता र लैङ्गिकतामा आफूले ज्ञान प्राप्त गरेको, र मूलधारका प्राज्ञ वा विशेषज्ञहरूले यस्ता कतिपय विषयहरूलाई सामान्य रूपले नहेर्ने वा समाजमा 'असामान्य' कहलिएको लाञ्छित समूहको दृष्टिकोणबाट हेर्न सक्दैनन्। यो शब्दकोषमा मैले सामाजिक उत्पीडनमा परेको वर्गको दृष्टिकोणबाट लेख्ने प्रयास गरेको हो। यो शब्दकोषका शब्दवालीहरू सबै स्थापितै हुनुपर्छ, हुन्छ नै भन्ने मेरो मान्यता छैन। यसबात कतिपय शब्दहरू प्रयोग हुन्छन् होलान्, कतिपय हुँदै हुँदैन होलान्, कतिपय प्रयोग गरेपछी परिमार्जित हुँदै गर्छन्, यस्ता धेरै सम्भावनाहरू छन्। समाजमा कुरा गर्न अप्ठ्यारा मानिएका कुराहरू वा समाजले लाञ्छनाको दृष्टिले हेर्ने विषयलाई पनि सामान्यिकरण गर्दै अभिव्यक्त गर्ने माध्यमलाई एउटा बल मात्र दिन खोजिएको हो।

यो शब्दकोष तयार पार्न मैले विभिन्न श्रोतहरूको मद्दत लिएँ। अनलाइन संस्कृत शब्दकोष, गुगल अनुवाद यन्त्र, विकिपिडिया व विक्सनरीको भरपूर प्रयोग गरिएको थियो। विकिपिडियामा विभिन्न विषयवस्तुका शब्दहरू खोजेर त्यसका अर्थ र परिभाषा खोजेँ ; विक्सनरीमा उक्त शब्दको विखण्डन र व्युतपत्ती खोजेँ र सोही ढङ्गमा वियुत्पनत्मक अर्थ मिल्ने गरी संस्कृत, हिन्दी, नेपाली वा विभिन्न अनुवादको प्रयोग गरेँ। कतिपय शब्दहरूको अनुवाद विकिपिडियाकै सोही लेखको हिन्दी वा नेपाली संस्करणमा थियो। यसमा हाम्रो क्वयेर युवा समूह ( क्वयेर युथ ग्रुप) सहित क्वयेर अधिकार समूह ( क्वयेर राइट्स् कलेक्टिभ् ) का साथीहरूले पनि म संलग्न विभिन्न अभियान र मैले गरेका विभिन्न कार्यहरूमा साथ सहयोग र आलोचनात्मक टिप्पणी दिएकोमा म कृतज्ञता ज्ञापन गर्न चाहन्छु ।

आशा छ कि यस शब्दकोष तपाइँको लागि उपयोगी हुनेछ।

**ढाँचा**

**शब्द** / शब्दको उच्चरण / अङ्ग्रेजी अनुवाद ( शब्दको स्रोत ) वा ( सांक्षेप्तीकरण ) [ शब्दको विग्रह ] पदवर्ग. शब्दको अर्थ ; ( उदाहरण )

- उक्त शब्द सँग अर्को शब्द आएमा त्यसको अर्थ

**अनावासीय** / अनाबसिय / (तत्स.) [ अन् + आवसीय ] वि. आवसीय नभएको ; आवास नभएको ( उदा. होस्टेल नभएको बिहान घरबाट आउने राती घरमै फर्कने विद्यालय एक प्रकारको अनावसीय विद्यालय हो )

- विद्यार्थी ना. ती विद्यार्थी जो आवासमा बसिरहेका छैनन्

**सांक्षेप्तीकरण**

अनु. - अनुकरणात्मक शब्द
आ. - आगन्तुक शब्द
उदा. - उदाहरण
क.बो. – कठबोली slang
क्रि. – क्रियापद
तत्स. - तत्सम शब्द
तद. - तद्भव शब्द
ना. - नाम
वि. - विशेषण
सर्व. - सर्वनाम
सां. -सांक्षेप्तीकरण
हे. – हेर्नुहोस्

**खस नेपाली भाषाका शब्दकोषहरूमा प्रयोग वर्णानुक्रम :** अ आ इ ई उ ऊ ऋ ए ऐ ओ औ क ख ग घ ङ च छ ज झ ञ ट ठ ड ढ ण त थ द ध न प फ ब भ म य र ल व श ष स ह क्ष [ क् + ष ], त्र [ त् + र ], ज्ञ [ ज् + ञ ] सोही वर्णानुक्रममा

# अ

**अङ्ग** organs (तत्स.) ना. शरीरको भाव वा अवयव

**अङ्गालो मार्नु** to hug क्रि. दुबै हात फैलाएर अँगालोमा लिनु वा च्याप्नु

**अड्डेल** / अड्डेल् / (मेटी भाषा) वि. १. ठूलो शिश्न २. राम्रो शिश्न

**अण्डकोष** / अन्डकोस् / testes (तत्स.) ना. पुलिङ्गी मानिसहरूको यौनाङ्ग शिश्नको दुई तिर अण्डा जस्तो थैली जसमा अण्डाशय र शुक्रकीट हुने गर्दछ

**अधिकार** / अधिकार् / right (तत्स.) [अधि + कार] ना. हक, स्वामित्व र स्वतन्त्रताको कानुनी, सामाजिक वा नैतिक सिद्दान्त

**अन्तर्गैरद्वयसांख्याउनिक** tercetrosexual ना. अन्तर्लिङ्गी गैर-द्वयसांखिक तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

**अन्तर्पुरुष्याउनिक** terandosexual ना. अन्तर्लिङ्गी पुरुष तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

**अन्तर्महिल्याउनिक** tergynesexual ना. अन्तर्लिङ्गी महिला तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

**अन्तर्लिङ्गी** intersex (तत्स) [ अन्तर् + लिङ्ग + ई ] ना. पुलिङ्गी र स्त्रीलिङ्गी शरीरका टिपिकल धारणाहरूमा नअटाउने यौन विशेषताहरू जस्तै यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा भएका व्यक्तिहरू ; एउटा छाता शब्द जसमा पुलिङ्गी वा स्त्रीलिङ्गीको परिभाषामा छुट्याउन नसक्ने यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा सहितका यौन विशेषता भएका व्यक्तिहरू पर्दछन्

- **व्यक्ति प्रति घृणा** intersexphobia

**अन्तर्वर्गियता** intersectionality (तत्स.) [अन्तर् + वर्ग +इय + ता ] ना. (सामाजिक न्यायको क्षेत्रमा प्रयोग गरिने) सामाजिक उत्पीडन, विभेद र सिमान्तकरणका सबै आधारहरू एक अर्कासँग गाँसिएको र अन्तरसम्बन्धित रहेको मान्यतामा आधारित सिद्दान्त ; सामाजिक न्यायको क्षेत्रका प्रयोग गरिने एक सिद्दान्त जसमा विभेदको कुनै एक आधारलाई उक्त समाजमा व्याप्त विभेदका अन्य आधारहरूसँगको तुलना, अन्तरसम्बन्ध, र त्यसको संजाललाई विशेषणात्मक दृष्टिकोणले हेरिन्छ (उदा. महिला आन्दोलका क्षेत्रमा महिला भएकै कारणले लैङ्गिकताको आधारमा भोग्ने विभेदमा दलित महिलाहरूले दलित भएको र महिला भएको दुईवटा आधारमा भोग्ने विभेद महिला आन्दोलनको एक अन्तर्वर्गिय विषय हो ।)

**अपाङ्गता भएका महिला विरोधी** misogyable वि. अपाङ्गता भएका महिला प्रति विभेदकारी मानिसिकता भएको ; अपाङ्गता भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

**अप्रणयात्मक अयौनिक** aromantic asexual ना. कुनै प्रकारको प्रणयात्मक भावना पनि नहुने, प्रणयात्मक भावना शून्य अयौनिक व्यक्तिहरू

**अयौनात्मक प्रणय** aromantic (तत्स.) [ अ + यौन + आत् + मक ] ना. यौन भावना रहित प्रणय

**अयौनिक** / अयौनिक् / asexual (तत्स.) [ अ + यौन + इक ] वि. अरु प्रति यौन आकार्षण नहुने व्यक्ति ; यौन आकर्षण अनुभवहीन व्यक्ति

**अयौनिकता** asexuality (तत्स.) [ अ + यौन + इक + ता ] ना. अरु प्रति यौन आकार्षण नहुनु ; यौन आकर्षण अनुभवहीन

**अर्धपुरुष** / अर्धपुरुस् / demiman (तत्स.) [ अर्ध + पुरुष ] ना. आधि रूपमा पुरुषको पहिचान भएपनि, आधि रूपमा भने लैङ्गिक तरलता हुने व्यक्ति ;  आफूलाई पुरुषकै रूपमा हेरेपनि अर्धहद सम्म तरल लैङ्गिकता भएका व्यक्ति

**अर्धप्रणयात्मक अयौनिक** demiromantic asexual ना. भावनात्मक सम्बन्ध प्रगाढतामा प्रणयात्मक भावना हुने अयौनिक व्यक्तिहरू

**अर्धमहिला** demiwoman (तत्स.) [ अर्ध + महिला ] ना. आधि रूपमा महिलाको पहिचान भएपनि, आधि रूपमा भने लैङ्गिक तरलताहुने व्यक्ति ; आफूलाई महिलाकै रूपमा हेरेपनि अर्धहद सम्म तरल लैङ्गिकता भएका व्यक्ति

**अर्धयौनात्मक प्रणय** demiromantic (तत्स.) [ अर्ध + यौन + आत् + मक ] ना. १. अरु व्यक्तिसँग भावनात्मक निकटता अनुभव गरिसकेपछी मात्र महसुस हुने प्रणय। २. प्रणय अनुभव गर्नका निम्ति भावनात्मक निकटता महसुस हुनुपर्ने

**अर्धयौनिक** / अर्धयौनिक् / demisexual (तत्स.) [ अर्ध + यौन + इक ] वि. १. भावनात्मक रूपले सब्बल सम्बन्ध नजोडिएसम्म यौन आकर्षण वा कुनै प्रकारको प्रणयात्मक आकर्षण महसुस नहुने व्यक्ति

**अर्धलिङ्गी** demigender (तत्स.) [ अर्ध + लिङ्ग + ई ] ना. ती व्यक्तिहरू जो आधि रूपमा एउटा लैङ्गिकता सँग सम्बन्ध राख्छन्, र आधि रूपमा भने तरल लैङ्गिकताका हुन्छन्

**अलिङ्गी** agender (तत्स.) [ अ + लिङ्ग + ई ] ना. लैङ्गिकता नभएका व्यक्तिहरू ; आफूलाई कुनै पनि लैङ्गिकतासँग सम्बन्ध नभएको भनी पहिचान गर्ने व्यक्तिहरू ; जो आफूलाई न पुरुष भएको अनुभव गर्छन् न महिला भएको ; पुरुष पनि होइन र महिला पनि होइन भनेर चिनाउने व्यक्तिहरू

**अल्पसङ्ख्यक** / अल्पसङ्ख्यक् / minority [ अल्प + संख्या + इक ] (तत्स.) वि. थोरै सङ्ख्याको; थोरै संख्यामा रहेको

**अश्वेत महिला विरोधी** misogynoir वि. अश्वेत महिला प्रति विभेदकारी मानिसिकता भएको ; अश्वेत भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

# आ

**आज्ञाकारी** submissive ना (यौनिकताको क्षेत्रमा) कुनै पनि गुनुत्वरीडाष्टी प्रवृत्तिको यौन सम्पर्कमा आज्ञाकारी व्यक्तिको भूमीका निर्वाह गर्ने वा जो माथी प्रभुत्व जमाइन्छ

**आत्मासातित् पारलिङ्गीविरोधी धारणा** internalized transphobia (तत्स.) ना. १. सामाजिक रूपमा व्यापक पारलिङ्गीविरोधी धारणाहरूलाई पारलिङ्गी व्यक्तिहरूले नै आत्मसात् गर्नु ; २. पारलिङ्गी व्यक्तिहरू प्रति समाजले सिकाएका विभेदपूर्ण धारणाहरूलाई पारलिङ्गी व्यक्तिहरूले नै मनन गरी स्वःलाञ्छना लगाउनु र त्यही अनुरूप व्यवहार गर्नु ; ३. पारलिङ्गी व्यक्ति प्रति रहेका विभेदकारी धारणामा सामाजिकरण हुनाले पारलिङ्गी व्यक्तिहरूले नै सोलाई सत्य मानी आत्मसात गर्नु

**आत्मासातित् महिलाविरोधी धारणा** internalized misogyny (तत्स.) ना. १. सामाजिक रूपमा व्यापक महिलाविरोधी धारणाहरूलाई महिलाहरूले नै आत्मसात् गर्नु ; २. महिला प्रति समाजले सिकाएका विभेदपूर्ण धारणाहरूलाई महिलाहरूले नै मनन गरी स्वःलाञ्छना लगाउनु र त्यही अनुरूप व्यवहार गर्नु ; ३. महिला प्रति रहेका विभेदकारी धारणामा सामाजिकरण हुनाले महिलाहरूले नै सोलाई सत्य मानी आत्मसात गर्नु

**आत्मासातित् लिङ्गविभेद** internalized sexism (तत्स.) ना. १. सामाजिक रूपमा सिकिएका लिङ्गविभेदपूर्ण व्यवहार तथा धारणाहरूलाई आत्मसात गर्नु ; २. आफ्नै लिङ्ग प्रति समाजले सिकाएका विभेदपूर्ण धारणाहरूलाई मनन गरी स्वःलाञ्छना लगाउनु र त्यही अनुरूप व्यवहार गर्नु ; ३. आफ्नै लिङ्ग प्रति रहेका विभेदकारी धारणामा सामाजिकरण हुनाले सोलाई सत्य मानी आत्मसात गर्नु

**आत्मासातित् विषमयौनिकतावादी धारणा** internalized heterosexism (तत्स.) ना. १. सामाजिक रूपमा व्यापक विषमयौनिकतावादी धारणाहरूलाई समयौनिक, द्वयौनिक वा गैर-विषयमयौनिक व्यक्तिहरूले नै आत्मसात् गर्नु

**आदिवासी महिला विरोधी** misogynindi वि. आदिवासी महिला प्रति विभेदकारी मानिसिकता भएको ; आदिवासी भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

**आन्तर्लिङ्गी** endosex (तत्स) [ आन्तर् + लिङ्ग + ई ] ना. पुलिङ्गी र स्त्रीलिङ्गी शरीरका टिपिकल धारणाहरूमा अटाउने यौन विशेषताहरू जस्तै यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा भएका व्यक्तिहरू ; सामाजिक मान्यता र परिभाषा अनुसार पुलिङ्गी र स्त्रीलिङ्गी शरीर तथ यौन विशेषताहरूलाई जनाउन प्रयोग गरिने एउटा छाता शब्द

**आलिंगन** cuddle ना. १. कसैलाई माया वा स्नेह देखाउने हिसाबले दुई हातबाट लामो समय च्याप्नु वा अँगाल्नु ; २. कसैलाई अँगालेर नरमतापूर्वक शारीरिक घर्षण गर्नु

# इ

**इङ्गित** / इङ्गित् / assigned (तत्स.) [ इङ्ग + इत ] वि. औँल्याइएको, संकेत गरिएको, यसो हो भनी निर्धारण गरिएको

**- लिङ्ग** assigned sex ना. कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी

यौनाङ्ग हेरी सामाजिक मान्यता अनुसार निर्धारण गरिदिएको लिङ्ग

**इलुइलु** (आ. नेपालभाषा ) ना. माया, प्रेम

# ई

**ईक्षण** /इछयन्/ stalking (तत्स.) [ ईक्ष + अन ] ना. कुनै व्यक्तिप्रति अवांछित र अनावश्यक निगरानी राख्नु

# उ

**उत्कण्ठित** / उत्कन्ठित् / curiouser (तत्स.) [ उत् + कण्ठ + इत ] वि. अनुभव गर्न वा थहा पाउन अत्यन्तै उत्सुक ; उत्सुकताको सब्बल भावना रहेको

- ( क्वयेर आन्दोलनको परिपक्षमा प्रयोग ) : क्वयेर - यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक बारे थहा पाउन, जान्न निकै उत्सुकता राख्ने गैर-क्वयेर व्यक्ति

**उत्तेजक** /उत्तेजक्/ stimulant (तत्स.) [ उत् + तिज् + अक ] वि. उत्तेजना उत्पन्न गर्ने

**उत्तेजना** arousal (तत्स.) [ उत् + तेजन् + आ ] ना. प्रत्यक्ष बिन्दुसम्म इन्द्रियहरू उद्दिप्त वा सचेत हुने शारीरिक र मनोवैज्ञानिक अवस्था

**उत्पीडक** / उत्पीडक् / perpetrator (तत्स.) [ उत् + पीड् + अक ] वि. पीडा दिने व्यक्ति ; कष्ट दिने वा अपराध गर्ने व्यक्ति

**उत्पीडित** / उत्पीडित् / victim (तत्स.) [ उत् + पीड् + इत ] वि. पीडा पाउने वा भोग्ने व्यक्ति ; कष्ट पाउने वा भोग्ने व्यक्ति

**उपानोत्तेजना** Shoe fetish ना. कृत्रिमभुज् कामोत्तेजनाको प्रकार जसमा कुनै व्यक्तिको यौन उत्तेजना र सन्तुष्टिमा खुट्टामा लगाउने सामान जुत्ता मोजाको संलग्नता हुन्छ

**उभयलिंगी** hermaphrodite ना. जीव जन्तुको विविधतामा त्यस्ता प्राणीहरू जसमा पुलिङ्गी वा स्त्रीलिङ्गीको छुट्टा छुट्टै भौतीक शरीरहरूमा नहुने र एउटै शरीरमा पुलिङ्गी एवं स्त्रीलिङ्गी दुबै प्रजजन प्रणाली मौजुद भएर स्वःप्रजनन गर्ने क्षमता भएका ; अक्सर मेरुदण्ड नभएका जीवजन्तुहरूमा पुलिङ्गी र स्त्रीलिङ्गी छुट्टाछुट्टै हुँदैन र आफूले आफैलाई यौन सम्पर्क गरी प्रजनन गर्न सक्ने वा सोही प्रजातिका दुईजना जीवले आफूले चाहेको यौनाङ्गको प्रयोग गरेर प्रजनन गर्न सक्ने जैविक विविधता ; ( मानव जाति वा कुनै स्तनधारी जीवमा उभयलिंगी हुँदैन ; मानव जातिको अन्तर्लिङ्गी व्यक्तिहरू उभयलिंगी होइनन् ; र यी दुई फरक विषय हुन् )

**उम्प्रुपा** (आ. लोहरुङ) ना. पुलिङ्गी

**उरुमैथुन** intercrural sex (आ. बङ्गाली) ना. एक व्यक्तिले आफ्नो शिश्नलाई अर्को व्यक्तिको तिघ्रामा घोटेर वा तिघ्राहरू बीच शिश्नलाई च्यापेर घर्षण गरी गरिन यौन क्रियाकलाप

# ए

**एककालिक यौन सम्बन्ध** हे. एकवारम् यौन सम्बन्ध

**एकवारम् यौन सम्बन्ध** one night stand (तद.) ना. एकपटक यौन सम्बन्ध राखेपछी उक्त सम्बन्धमा सहभागीहर बीच त्यसपछी थप कुनै सम्बन्ध वा सम्पर्क नहुने ; कुनै एक वा एक भन्दा बढी मानिस(हरू)सँग एकपटकका लागि मात्र यौन सम्बन्ध राखेर तत्पश्चात् कुनै प्रकारको सम्पर्क वा सम्बन्धमा नरहने अभ्यास

**एच.आइ.भि.** HIV ना. एक प्रकारको भाइसर जसले मानिसको प्रतिरक्षा प्रणालीमा क्षती पुर्याउँछ

**एच.आइ.भि. एड्स** HIV/AIDS ना. मानव प्रतिरक्षा प्रणाली क्षती गर्ने भाइसको संक्रमण पछी हुने विभिन्न स्थिति, परिस्थिति, लक्षण तथा परिणामहरू

**एड्स** AIDS ना. मानव अशरीरमा एच.आइ.भि भारस संक्रमण र/वा विकास भएको अवस्था

**एफेमिनेट** /एफेमिनेट्/ effeminate (आ. अङ्ग्रेजी) वि. महिला जस्तो, नारीत्व झल्कने पुरुष

# ऐ

**ऐचा** midwife in Newa community (आ. नेपालभाषा) ना. बच्चा जन्माउन सहयोग गर्ने वा बच्चा प्रसव गर्ने परम्परागत ज्ञान भएको व्यक्ति ; नेवाः समुदायमा प्रसव गर्नका निम्ति बोलाइने प्रसुती सम्बन्धी परम्परागत ज्ञान भएका महिलाहरू जसको नीज बच्चाको जन्मसंस्कारमा समेत भूमीका हुन्छ

# औ

**औँलामैथुन** ना. हे. भेदामैथुन

**औपनिवेशिक लैङ्गिक भूमीका** colonial gender norms ना. लैङ्गिकताका ती परिभाषा वा भूमीका जुन औपनिवेशिक शासनले लागु गरे वा लादे

# क

**कञ्जट** joint between two legs (तत्स.) ना. दुईवटा खुट्टाहरू जोडिने भाग, खुट्टाहरूको बीचको भाग

**कञ्जबन्धन** / कन्जबन्धन् / tucking (तद.) ना. आफ्नो शिश्नको आकार कपडा बाहिरबाट नदेखाउनका निम्ति अपनाइने विधि ; शिश्नलाई

लुकाउने हेतुले अपनाइने विधि ( उदा. विशेष गरी पारलिङ्गी महिला र पुदेस विषुपहिरणीहरूले विभिन्न विधिहरूबाट आफ्नो शिश्नको आकार पोशाक बाहिरबाट नदेखियोस् भनेर कञ्जबन्धन गर्ने गर्दछन् )

**कटिवस्त्रोत्तेजना** Underwear fetish [ कटिवस्त्र + उत्तेजना ] ना. कृत्रिमभुज् कामोत्तेजनाको प्रकार जसमा कुनै व्यक्तिको यौन उत्तेजना र सन्तुष्टिमा भित्रि वस्त्र कट्टुको संलग्नता हुन्छ

**कठोरात्मक यौन सम्पर्क** hardcore sex (तत्स.) ना. जङ्गली स्वभावमा धेरै शक्ति लगाएर कठोरतापूर्वक गरिने यौन सम्पर्क

**कण्डम** / कन्डम् / condom ना. यौन सम्पर्कका क्रममा गर्भधारण वा यौन संक्रमण रोक्नका निम्ति प्रयोग गरिने साधन जुन यौनाङ्गमा लगाइने गरिन्छ ; मुख्यतः शिश्नका निम्ति शिश्न आकारकै लाम्चो र उत्तेजित शिश्नमा लगाउने खोल हो जसले यौन सम्पर्कका क्रममा वीर्यलाई अरुको शरीरमा पस्न दिँदैन र योनीका निम्ति फराकिलो र लाम्चो आकारको साधन जसको बन्द भाग योनीद्वारमा छिराइन्छ

**कण्डो** ना. पिठिउँ, चाक, पछाडीको भाग

**कम्पन यन्त्र** vibrator ना. यौन उत्तेजना सृजन गर्न कम्पन उत्पादन गर्ने कृत्रिम साधन

**कल्याणधारी लिङ्गभेद** benevolent sexism ना. प्रशंसा गरेझैँको लयमा वा माया स्नेह जताउने नीजको हितको लागि जस्तै कुरा राख्ने तर त्यस्ता कुराहरू लिङ्गभेदमा केन्द्रित वा जडित हुन्छ ; (उदा. महिलाहरूको त प्राकृतिक स्वभाव नै ममता र स्नेहले भरिएको हुन्छ र पालनपोषण गर्ने सब्बल गुण हुन्छ, त्यसैले महिलाहरूले बच्चा हुर्काउने सबै जिम्मा लिएर पुरुषहरू बच्चा हुर्काउने जिम्मेवारीबाट भाग्नु )

**कातोए** (आ. थाइ) ना. हे. काथोए

**काथोए** kathoey (आ. थाइ ) ना. थाइ समाजमा पारलिङ्गी महिलाहरूलाई जनाउन प्रयोग गरिने शब्द

**कामलिप्सा** libido (आ. हिन्दी) ना. यौन सम्बन्ध प्रति मानिसको चाहना ; यौन चाहनाको प्रबलता सम्बन्धी मानिसको आन्तरिक ऊर्जा

**कामुक** / कामुक् / erotic (तत्स.) वि. यौन उत्तेजना अनुभव गराउने कुनै पनि विषयवस्तु

**कामुक मानभंग** erotic humiliation ना. गुनुत्वरीडाष्टीको एक प्रकार जसमा कुनै व्यक्ति(हरू)लाई यौन उत्तेजनाको निम्ति गरिने सहमतीय निरादरात्मक व्यवहार

**कामुक साहित्य** erotic literature, literotica ना. सामाग्री उपभोग गर्दा यौन उत्तेजना उत्पादन हुने हिसाबले कोरिएको यौन सम्पर्क र सम्बन्ध बारे व्याख्या गर्ने साहित्यको विधा

**कामुक स्वप्न** हे. यौन स्वप्न

**कामोत्पादनी क्षेत्र** erogenous zone [ काम् + उत्पादन ] ना. मानव शरीरको क्षेत्र वा मानव शरीरका ती अङ्गहरू जुन उच्च संवेदनशील हुन्छ र चलाएमा यौन उत्तेजना शृजन हुने गर्दछ

**किङ्क** / किङ्क् / kink (आ. अङ्ग्रेजी) ना. सामान्य यौन सम्बन्धको मान्यता भन्दा पर,

कृत्रिमभुज् कामोत्तेजना वा गुनुत्वरीडाष्टी जस्ता चाहनाहरू समविष्ट भावना

**किन्नर** (तद.) ना. हिन्दु मिथ्या अनुसार महिला र पुरुष दुबैको गुण भएको एक पात्र, कतिपय भारतीय समाजहरूमा आफूलाई पहिचान गर्न यो शब्दको पनि प्रयोग गरिन्छ

**किशोरावस्था** adolescence (तत्स.) ना. बल्याबस्ताबाट प्रौढतातिर लम्कने आबस्था जसमा मानिसहरूको शारीरिक, भावनात्मक र समाजिक रूपमा तीव्र परिवर्तन हुन्छ ; बाल्यकालबाट वयस्क हुने परिवर्तनशीलताको उमेर ; सामान्यतः ९/१० वर्षको उमेर देखि १६/१७ वर्ष सम्मको उमेर

**कुकुरीय संभोग** dogging ना. सार्वजनिक वा अर्ध-सार्वजनिक स्थानमा यौन सम्पर्क गर्नु, अक्सर अरु हेर्ने मान्छेहरू पनि होस् भन्ने हेतुबाट

**कृत्रिम गर्भधारण** artificial insemination ना. यौन सम्पर्क बाहेक अन्य विधिहरूको प्रयोगद्वारा शुक्रकीटलाई व्यक्तिको गर्भाशय पुर्याएर गरिने गर्भधारण

**कृत्रिम यौनाङ्ग** silicone sex organs (तत्स.) ना. मानिसको यौन चाहना पूर्तीका निम्ति विभिन्न तत्वहरूबाट बनाइएको मानव यौनाङ्ग जस्तै कृत्रिम वस्तु

**कृत्रिमभुज् कामोत्तेजना** sexual fetishism (तद.) ना. यौन चाहनाको एउटा स्वरूप जसमा यौन आनन्दको प्राप्ती र सन्तुष्टी वा यौन उत्तेजना सुरु हुने वा बढ्ने कारण कुनै नीर्जीव वस्तु वा यौनाङ्ग बाहेकका शरीरका अङ्गहरूको संलग्नतासँग सम्बन्धित हुन्छ

**केथालिङ्गी** gender questioning (तत्स.) ना. एउटा शब्दवाली जुन आफ्नो लैङ्गिकता बारे अझै एक्स्प्लोर गरी रहेका व्यक्तिहरूले प्रयोग गर्छन् ; लैङ्गिकताको विविधतामा ‘म को हुँ’ भन्ने जिज्ञासा अझै रहेका र आफ्नो बारेमा अझै जान्ने प्रयास गर्दै गरेका र ‘म यही हुँ है’ भनेर दाबी नगरेका व्यक्तिहरू

**केशोत्तेजना** hair fetish [ केश + उत्तेजना ] ना. कृत्रिमभुज् कामोत्तेजनाको प्रकार जसमा कुनै व्यक्तिको यौन उत्तेजना र सन्तुष्टिमा कपालको संलग्नता हुन्छ

**कोथी** kothi (आ. भारत) ना. नारीत्व भएका पुरुषहरू ; पुरुषहरू जो अरु पुरुषहरूसँग यौन सम्पर्क राख्दा महिलाको भूमीका निर्वाह गर्दछन्

**क्लक हुनु** clocking क्रि. (पारलिङ्गी व्यक्तिहरूको सवालमा) कुनै पारलिङ्गी व्यक्ति जसलाई हेरेर मात्र पारलिङ्गी भनेर चिन्न सक्नु ; कुनै पारलिङ्गी व्यक्तिलाई देख्दा खेरी ऊ पारलिङ्गी हो भनेर ठम्याउन सक्ने

**क्वयेर** queer (आ. अङ्ग्रेजी) वि. १. समाजमा 'सामान्य' भनी परिभाषित गर्न खोजिएका लिङ्ग, लैङ्गिक पहिचान र/वा यौन अभिमुखिकरण भन्दा परका विविधता जनाउने छाता शब्द ; २. समाजले मान्यता प्रदान गरेको आन्तर्लिङ्गी शरीरहरू, त्याचलिङ्गी लैङ्गिक पहिचान र विषमयौनिक यौन अभिमुखिकरण बाहेकका जैविक लिङ्ग, लैङ्गिक पहिचान र यौन अभिमुखिकरणलाई जनाउने छाता शब्द ; ३. जो व्यक्तिहरू आन्तर्लिङ्गी, त्याचलिङ्गी र/वा विषयमयौनिक होइनन् ; ४. स्त्रीलिङ्गी वा पुलिङ्गी परिभाषामा अटाउन सक्ने शारीरिक

विविधता भन्दा परका शारीरिक विविधता भएका व्यक्तिहरू, जैविक लिङ्ग पुलिङ्गी र लैङ्गिक पहिचान पुरुष एवं जैविक लिङ्ग स्त्रीलिङ्गी र लैङ्गिक पहिचान महिला भन्दा परका लैङ्गिक विविधताहरू तथा पुरुष र महिला बीचको यौन र प्रणयात्मक आकर्षण भन्दा परका अनुभवहरूलाई समेट्ने व्यापक शब्द ;

- (अरु प्रयोगहरूमा ) : समाजले 'सामान्य' कहल्याएको वा सामाजिक मूल्य मान्यतामा मेल खाने भन्दा फरक वा सामाजिक मूल्य मान्यतामा 'सामान्य' भनेर नमानिएका विषयवस्तु

**- शास्त्र Queer studies** : १. एक शैक्षिक शास्त्र जसमा क्वयेर विविधता बारे अध्ययन गरिन्छ र समाजमा 'सामान्य' कहलिएका लैङ्गिकता तथा यौनिकताका परिभाषाहरू माथी प्रश्न गरिन्छ ; २. क्वयेर पहिचानहरू तथा विविधता बारे व्यापक अध्ययन गर्ने शास्त्र

**क्वयेरलिङ्गी** (आ.) हे. लैङ्गिक क्वयेर

**क्वायेङ्शा** quangsha ना. क्वयेर अधिकार अभियानमा सीमित समूहले बाहेक अरुले नबुझ्ने गरी क्वयेर युवा समूहले निर्माण गरेको भाषिक स्वरूप, गोप्य भाषा

**क्वासि** (आ. नेपालभाषा) शिश्न

**क्विकी** quickie ना. सीमित समय मात्र उपलब्ध भएको बेला हतारमा भ्याउने गरी गरिने यौन सम्बन्ध

**क्षणिक त्याचलिङ्गी विशेषाधिकार** conditional cisgender privilege ना. कुनै पारलिङ्गी व्यक्ति, ऊ पारलिङ्गी हो भन्ने विषय अरुलाई थहा नहुन्जेल वा उसले नभनुन्जेल एक त्याचलिङ्गी व्यक्तिकै हैसियतले पाउने व्यवहार जुन ऊ पारलिङ्गी हो भन्ने थहा पाउनासाथ गुम्दछ ; अरु कसैले आफू पारलिङ्गी भन्ने विषय थहा नपाउन्जेल पाइने समान व्यवहार जुन थहा पाउन बित्तिकै सामाजिक यथार्थको विभेदपूर्ण व्यवहारमा परिणत हुन सक्छ

# ख

**खुलाइदिनु** to out (someone), outing (तत्स.) क्रि. अर्को व्यक्तिको लैङ्गिक पहिचान वा यौन अभिमुखिकरण (कतिपय अवस्थामा जैविक लिङ्ग)को बारेमा नीजको सहमती बिना नै तेस्रो व्यक्तिलाई भनिदिनु ; अर्को व्यक्ति क्वयेर विविधता अन्तर्गत पर्दछ भनेर तेस्रो व्यक्ति(हरू)लाई खुलासा गरिदिनु

**खुलेर आउनु** (तत्स.) क्रि. हे. खुल्नु

**खुल्नु** to come out (तत्स.) क्रि. (क्वयेर क्षेत्रको प्रयोगमा) सबै मानिसहरू कि त्याचलिङ्गी कि विषमयौनिक भनेर पूर्वनिर्धारित सोच बनाएको सामाजिक अवस्थामा आफ्नो लैङ्गिक पहिचान वा यौन अभिमुखिकरण सो भन्दा फरक वा क्वयेर पहिचान अन्तर्गत पर्छ वा आफूले अनुभव गर्ने वास्तविक लैङ्गिक पहिचानको बारेमा अर्को व्यक्तिलाई खोल्नु वा भन्नु, कतिपय अवस्थामा अन्तर्लिङ्गी विविधता पनि नहुर्केसम्म थहा नहुने भएकाले त्यस्ता अवस्थामा पनि लागू हुन्छ ; आफू क्वयेर विविधता अन्तर्गत पर्छ भनेर अरुलाई बताउनु ;

आफ्नो लैङ्गिक पहिचान वा यौन अभिमुखिकरण (कतिपय अवस्थामा जैविक लिङ्ग) समाजले अनुमान गरेको भन्दा भिन्न हो भनेर अरुलाई भन्नु

**खुस्रा** khusra (आ. पञ्जाबी) ना. पञ्जाबी समाजमा तेस्रोलिङ्गीहरूको समुदाय

**खैर्याउनिक** graysexual (तत्स.) [ खैरो + यौन + इक ] वि. १. यौन भावना हुनु र नहुनु बीचको मध्यस्त खैरो क्षेत्रको अनुभव भएका व्यक्तिहरू ; यौनिक हुनु र अयौनिक हुनु दुई अनुभवको बीचमा रहेको खैरो क्षेत्रका अनुभव हुने व्यक्तिहरू ; २. सामान्यतः यौन आकर्षण अनुभव नभएपनि कहिलेकाहीँ हुने, यौन आकर्षण अनुभव भएपनि यौन सम्बन्ध राख्ने चाहना न्यून हुने, वा यौन आकर्षण र यौन सम्बन्ध राख्ने चाहना अनुभव गरे पनि त्यसलाई व्यवहारमा उतार्न सक्ने जतिको सब्बल चाहना नहुने व्यक्तिहरू

**खैर्याउनिकता** graysexuality (तत्स.) [ खैरो + यौन + इक + ता ] ना. १. अरु व्यक्ति प्रति यौन भावना हुनु र नहुनु बीचको मध्यस्त ; यौन आकर्षणको अनुभव हुनु र यौन आकर्षण रहित हुनु दुईको बीचमा ; २. यौनिक हुनु र अयौनिक हुनु दुई अनुभवको बीचमा रहेको खैरो क्षेत्रका अनुभवहरूलाई बुझाउने छाता शब्द

**ख्वाजासिरा** khwajasira (आ. उर्दू) ना. पाकिस्तानी समाजमा महिला र पुरुषको परिभाषामा आफूलाई नराख्ने व्यक्तिहरूको समाज, जसको आफ्नै छुट्टै सामाजिक मूल्य मान्यता, रीतिथिति र परम्पराहरू हुन्छन् ; लैङ्गिक पहिचानको आधुनिक दृष्टिकोणभन्दा फरक यो अवधारणा अन्तर्गत सामाजिक मूल्य मान्यताको महिला र पुरुष बहेकका व्यक्तिहरूको सामाजिक संस्था

**ख्वासा** pubic hair (आ. नेपालभाषा) ना. यौनाङ्गमा पलाउने रौँ

# ग

**ग.य.क्ति.** enby (सां.) गैर द्वयसांखिक लैङ्गिक पहिचान भएका व्यक्ति

**गतिशील शुक्रकीट** spermatozoon ना. ती शुक्रकीट जुन चायपचाय शक्तिबाट स्वःगतिशील हुन्छ वा आफै यता उति गर्न सक्छ

**गतिहीन शुक्रकीट** spermatium ना. ती शुक्रकीट जुन स्वःगतिशील हुँदैन वा आफै यता उति गर्न सक्दैन

**गर्भ** (तत्स.) ना. पाठेघरमा रहेको भ्रुण

**गर्भकाल** / गर्भकाल् / pregnancy period (तत्स.) ना. गर्भधारणको समय

**गर्भधारण** conception (तत्स.) [ गर्भ + धारण ] ना. गर्भ रहने प्रकृया

**गर्भनिरोधक** contraceptive (तत्स.) [ गर्भ + निरोधक ] ना. गर्भ बस्नबाट रोक्ने....
- चक्की pills
- साधन devices

**गर्भनिरोधन** contraception (तत्स.) [ गर्भ + निरोधन ] ना. गर्भ बस्नबाट रोक्ने कार्य

**गर्भपतन** abortion (तत्स.) [ गर्भ + पतन ] ना. गर्भावस्थालाई अन्त्य गर्नु ; कुनै व्यक्तिको पाठेघर बाहिर बाँच्न योग्य हुनु अघि भ्रुणलाई निष्कासन गर्नु

**गर्भवती** /गर्भवति/ pregnant woman (तत्स.) [ गर्भ + वत् + ई ] ना. गर्भधारण गरेकी महिला

**गर्भवत्** pregnant person (तत्स.) [ गर्भ + वत् ] ना. गर्भधारण गरेका व्यक्ति

**गाँड** (आ. हिन्दी) ना. गुदद्वार

**गाढकण्ठी यौन सम्पर्क** deep throat ना. शिश्नलाई मुख भित्र सम्म लगेर गरिने मुख मैथुन

**गाण्डु** (आ. हिन्दी) ना. गुदद्वार मैथुन गर्ने व्यक्ति

**गुणसूत्र** / गुनसुत्र / chromosome (तत्स.) ना. हरेक प्राणीको कोषाणुमा पाइने डि.एन.ए. र प्रोटिनको तन्तु रूपी संयुक्त संरचना जसले आनुवांशिक गुणहरूको निर्धारण गर्दछ

**गुदद्वार** / गुदद्वार् / anus (तत्स.) [गुद +द्वार] ना. पाचन प्रणालीको अन्तिम द्वार जसबाट दिशा वा पाच्य प्रणालीका अनावश्यक पदार्थहरू शरीरबाट निस्कन्छ ; दुई चाक बीचको प्वाल

**गुदानहर** / गुदानहर् / anal canal (तत्स.) ना. आन्द्राको तल्लो भाग जसले ठूलो आन्द्रा र गुदद्वारलाई जोड्छ

**गुनुत्वरीडाष्टी** BDSM (सां.) हे. गुलामी र अनुशासन, प्रभुत्व र आज्ञाकारीता, र पीडात्मक सन्तुष्टी

- **निरिक्षक** dungeon monitor ना. ती व्यक्ति जसलाई गुनुत्वरीडाष्टी, सुरक्षित यौन सम्पर्क र सहमतीय यौन सम्पर्कका बारेमा ज्ञान हुन्छ र कुनै पनि गुनुत्वरीडाष्टी पार्टीमा उसलाई निगरानी राख्ने व्यक्तिका रूपमा लिइन्छ

- **पार्टी** BDSM party ना. एक प्रकारको बन्दभेला वा पार्टी जसका सहभागीहरू गुनुत्वरीडाष्टी प्रवृत्तिको यौन सम्पर्क गर्छन ; गुनुत्वरीडाष्टी यौन सम्पर्क गर्नका निम्ति आयोजना गरिएको पार्टी

- **सीमा** BDSM limits ना. गुनुत्वरीडाष्टी यौन सम्बन्धमा जान अगाडी कसरी-कसरी कस्तो ढङ्गले केके गर्ने भन्ने बारेमा बनाइने मापदण्ड वा साझा समझदारी

**गुलामी र अनुशासन, प्रभुत्व र आज्ञाकारीता, र पीडात्मक सन्तुष्टी** Bondage and Discipline, Dominance and Submission, Sadomasochism (तत्स.) ना. कामुक र यौन क्रियाकलापको व्यापक अभ्यास जसमा संलग्न व्यक्तिहरू पारस्पारिक भूमीका निर्वाह गर्छन्, विशेषतः एक वा केही व्यक्तिहरू शक्ति जमाउने र अर्को व्यक्ति वा अरु व्यक्तिहरू शक्तिहीन भएको भूमीका निर्वाह गरेर यौन सम्पर्क राख्ने अभ्यास

**गे** (आ. अङ्ग्रेजी) वि. समयौनिक पुरुष

**गेचे** (मेटी भाषा) : समयौनिक पुरुष

**गेडा** (क.बो.) ना. अण्डकोष

**गैर-द्वयसांखिक** non-binary (तत्स.) [ गैर + द्वय + संख्या + इक ] वि. (लैङ्गिकता) द्वयसांखिक लैङ्गिक व्यवस्था अन्तर्गत नअटाउने लैङ्गिक पहिचानहरू जनाउने छाता शब्द

- **व्यक्ति प्रति घृणा** enbyphobia ना.

**गैरद्वयसांख्याउनिक** skoiliosexual / cetrosexual (तत्स.) [ गैर + द्वय + संख्या + यौनिक ] वि. गैर-द्वयसांखिक लैङ्गिक पहिचान भएका व्यक्तिहरू तर्फ आकर्षण अनुभव गर्ने व्यक्तिहरू

**गैर-प्रवेशात्मक यौन सम्पर्क** non-penetrative sex (तत्स.) ना. यौनाङ्ग वा मुखमा शिश्न अथवा कुनै वस्तुको प्रवेश नगरी गरिने यौन सम्पर्कका विविधता ; योनी, गुदद्वार वा मुखमा शिश्न वा अरु कुनै वस्तुलाई छिराएर गरिने यौन सम्बन्ध बाहेक छिराउने कार्य नगरिने यौन सम्पर्कका अभ्यासहरू

**गैरानुरूपलिङ्गी** gender non-conforming (तत्स.) [ गैर + अनुरूप + लिङ्ग + ई ] वि. आफूलाई लैङ्गिकताको कुनै परिभाषा अनुरूप नठान्ने ; पुरुषत्व र नारीत्वको परम्परागत परिभाषामा आफ्नो लैङ्गिक प्रस्तुतीकरण नअटाउने व्यक्तिहरू

**गोर्रिनु** to bully ना. दादागिरी गर्नु ; कसैमाथी प्रभुत्व जमाउन, हावि हुन वा कसैलाई डराउनुका निम्ति धम्की, दबाब दिनु वा जबरजस्ती र दुर्व्यवहार गर्नु

**गौरव यात्रा** / गौरब् यात्रा / pride parade ना. संस्कारका विभिन्न कुनाहरूमा क्वयेर विविधताको दृश्यता, अधिकार र उत्सवका लागि निकालिने र्‍याली र जनभेला ; अधिकारको संघर्ष, दृश्यताको घोषणा र उत्सवको उत्सर्नले क्वयेर विविधताका व्यक्तिहरू तथा समर्थकहरू भेला हुने र र्‍यालि गर्ने कार्यक्रम

**गौरवमास** / गौरब्-मास् / pride month ना. विश्वमा क्वयेर अधिकार आन्दोलनको सुरुवात भएको स्टोनवाल दङ्गा घटेको महिना "जून" जसमा क्वयेर अधिकारलाई लक्षित विशेष कार्यक्रम, भेला तथा गौरव यात्राहरू हुने गर्दछ

# घ

**घरेलु हिंसा** domestic violence [ घर + एलु ] ना. कुनै व्यक्तिले घरेलु सम्बन्ध भएको अर्को कुनै व्यक्तिलाई दिएको शारीरिक, मानसिक, यौनजन्य वा आर्थिक यातना

**घर्षण** / घर्सन् / friction (तत्स.) [ घृष् +अन ] ना. (यौनिकताको सवालमा) दुई व्यक्तिहरू वा दुई शरीरहरू एक अर्कासँग जुदाउने र रगड्ने कार्य

**घर्षणमैथुन** / घर्सन्-मैथुन् / rubbing sex (तत्स.) [ घृष + अन + मैथुन ] ना. एक व्यक्तिको यौनाङ्ग अर्को व्यक्तिको शरीरमा रगडेर यौन आनन्द प्राप्त गरिने विधि

**घृणा** / घ्रिना / hatred (तत्स.) ना. भित्रैबाट मन नपराउनु

**घोचाइ** nature of penetration [ घोच् + आइ ] ना. (यौनिकताको सवालमा) प्रवेशात्मक यौन सम्पर्कमा शिश्न, औँला वा कुनै वस्तु अर्को व्यक्तिको मलद्वार वा योनीमा छिर्ने तरिकालाई व्यक्त गर्न प्रयोग गरिने शब्द

# ङ

**ङ्याच्यक्क** अनु. (यौन सम्पर्कको सवालमा) स्तनलाई दबाउँदा हुने लचिलो आभाष

# च

**चतुर्सहभागित्व यौन सम्पर्क** foursome ना. चार जना व्यक्तिको संलग्नतामा हुने यौन सम्पर्क

**चरणोत्तेजना** foot fetish [ चरण + उत्तेजना ] ना. कृत्रिमभुज् कामोत्तेजनाको प्रकार जसमा कुनै व्यक्तिको यौन उत्तेजना र सन्तुष्टिमा खुट्टाको मुनी भाग र पैताला संलग्नता हुन्छ

**चरम आनन्द** orgasm ना. यौन सन्तुष्टि र आन्दन्दको पूर्ण महसुस भई संचित यौन उत्साह अचानक अवतारण भएको अवस्था

**चरमानन्द** ना. हे. चरम आनन्द

**चर्नु** (मेटी भाषा) क्रि. यौन सम्बन्धका निम्ति मानिसहरू खोज्ने कार्य

**चाक** / चाक् / buttocks ना. नरवानर प्रजातिका प्राणीहरूको शरीर संरचनामा श्रोणी क्षेत्रको पछाडी भागमा अवस्थित मांशापेशी र बोसोले भरिएको दुई गोलाकार अङ्गहरू

**चाख** / चाख् / ना. चाक शब्दलाई प्रायः जसो गैर-मातृभाषीहरूले गर्ने उच्चरण

**चाट्नु** to lick क्रि. (यौनिकताको सवालमा) एक व्यक्तिले अर्को व्यक्तिको यौनाङ्ग वा कुनै शारीरिक अङ्गलाई जिब्रोबाट खेलाउनु वा दबाउनु

**चिक्नु** (क.बो.) क्रि. यौन सम्पर्क गर्नु

**चिप्लो बनाउनु** lubricate ना. ( यौन सम्पर्क ) यौन सम्पर्क गर्दा प्राकृतिक रूपमा यौनाङ्गबाट चिप्लो पदार्थ वा रश बगेर अथवा तेल लगायतका आधुनिक उत्पादनहरूको प्रयोगमा यौन सम्पर्कमा हुने घर्षण रोक्ने प्रयास

**चिस्सा** (मेटी भाषा) वि. राम्रो

**चुम्नु** to kiss क्रि. चुम्बन गर्नु

**चुम्बन** / चुम्बन् / kiss (तत्स.) ना. कुनै व्यक्तिले आफ्नो ओठले अर्को व्यक्ति वा वस्तु छुनु वा दबाउनु ; माया, जोश, यौन आकर्षण, यौन उत्तेजना, स्नेह, सम्मान, अभिवादन, मित्रता, शान्ति, शुभकामना लयागतका भावनाहरू व्यक्त गर्नका निम्ति कुनै व्यक्तिले अर्को व्यक्तिलाई आफ्नो ओठबाट छुनु वा दबाउनु ( जसका भावार्थ सामाजिक सांस्कृतिक मूल्य मान्यता अनुसार फरक हुन सक्छ )

**चुम्मा चाटी** (क.बो.) प्रगाढ चुम्बन

**चेप्टी** (मेटी भाषा) ना. उरुमैथुन

- हान्नु क्रि. उरुमैथुन गर्नु

**चोदाचोदी** (आ. मध्य-पूर्वीय थारु) यौन सम्पर्क

# छ

**छक्का** (आ. कन्नड भाषा) ना. भारतको कर्नाटक राज्यमा सौन्दर्य नृत्यमा विज्ञ मानिने

महिला र पुरुष भन्दा माथिल्लो दर्जा दिइएको परम्परागत रूपमा अलौकिक शक्ति भएको र आशिर्वाद / श्राप लाग्छ भन्ने जनविश्वास रहेको एक समुदाय ( यस शब्दलाई नेपालको सन्दर्भमा अपशब्द वा हेपेर बोलिने गालीगलौजको रूपमा पनि प्रयोग गरिन्छ, जसबारे हामी संवेदनशील हुनुपर्छ )

**छत्तीस हान्नु** (क.बो.) क्रि. हस्त मैथुन गर्नु

**छद्म साटासाटी** soft swinging ना. आ-आफ्नै प्रतिबद्ध सम्बन्धमा बसेको वा वैवाहिक जोडीसँग यौन सम्पर्क गर्ने तर एउटै कोठा भित्र एक भन्दा बढी जोडीहरू सँग सँगै छेउछेउमै रहेर

**छम्पु** (आ. तामाङ) यौनाङ्ग

**छम्मा** (क.बो.) ना. केटीसाथी

**छाती** / छाति / chest ना. मानव शरीरमा घाँटी र पेट बीचको भाग

**छेक्तार्पु** (आ. दुमी) ना. पुरुष

**छोल्नु** (क.बो.) क्रि. हस्त मैथुन गर्नु

# ज

**ज.त्रि.इ.** AFAB (सां.) जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका व्यक्ति

**ज.पु.इ.** AMAB (सां.) जन्मँदा पुलिङ्गी इङ्गित गरिएका व्यक्ति

**जन्मँदा अन्तर्लिङ्गी इङ्गित गरिएका** assigned intersex at birth ना. . कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौनाङ्ग अस्पष्ट वा दुबै भएको आधारमा नीजलाई अन्तर्लिङ्गी भनेर निर्धारण गर्ने काम

**जन्मँदा इङ्गित गरिएको लिङ्ग** sex assigned at birth ना. कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौन अङ्ग वा विशेषताको आधारमा नीजको लिङ्ग निर्धारण गर्ने काम

**जन्मँदा पुलिङ्गी इङ्गित गरिएका** assigned male at birth ना. कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौनाङ्ग शिश्न भएको आधारमा नीजलाई पुलिङ्गी भनेर निर्धारण गर्ने काम

**जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका** assigned female at birth ना. कुनै बच्चा जन्मन बित्तिकै नीजको बाहिरी यौनाङ्ग योनी भएको आधारमा नीजलाई स्त्रीलिङ्गी भनेर निर्धारण गर्ने काम

**जबरजस्ती करणी** हे. बलाद्कार

**जामे** sibling [ तद. ] एक वा एक भन्दा बढी अभिभावकहरू साझा रहेको व्यक्ति ; दाजु, भाइ वा दिदी बहिनी शब्दका सट्टामा प्रयोग गर्न सकिने लैङ्गिक तटस्थ र जेष्ठ्यता तटस्थ शब्द

**जैविक लिङ्ग** biological sex ना. हे. लिङ्ग

**जोइला जानु** क्रि. आफ्नो महिला प्रेमीसँग विवाह गर्नका निम्ति सामाजिक मान्यता अनुसार विवाह संस्कार पूरा नगरी अधिकांश अवस्थामा अरु कसैले थहा नपाउने गरी जानु वा भाग्नु

**जोई** (क.बो.) श्रीमती

**जोखिम सचेत सहमतीय किङ्क** risk-aware consensual kink ना. यौन सम्पर्क र यौन सन्तुष्टी प्राप्त गर्दा संलग्न सबै व्यक्तिहरू जोखिमपूर्वक क्रियाकलाप गर्नका लागि सचेत सहमती जनाएर गर्ने एक प्रकारको गुनुत्वरीडाष्टी अभ्यास

**जोगप्पा** (आ. कन्नड भाषा) ना. आफूलाई महिला र पुरुष भन्दा फरक मान्ने भारतको कर्नाटक राज्यमा येल्लम्मा देवीको भक्त मानिने एक समुदाय, यस समुदायमा लैङ्गिकताको कठोर परिभाषा नभएर तरल, खुल्ला र सीमामुक्त अभ्यास हुन्छ

**जोग्ती** (आ. भारतीय भाषाहरू) हिजडा समुदायको एक उप-समुदाय जसले आफ्नो जीवन कुनै एक ईश्वरको आराधना र भक्तिमा बिताउँछ र त्यही अनुरूप नै आफ्नो जीवनशैलीलाई यापन गर्छ

**जोचेतीङ्क** / जोचेतिङ्क् / RACK (सां.) जोखिम सचेत सहमतीय किङ्क

**जोडी** / जोडि / couple ना. विवाह, प्रेम वा कुनै प्रणयात्मक सम्बन्धले जोडिएका दुई व्यक्ति

**जोबन लाउनु** (मेटी भाषा) क्रि. चोर्नु

**जोबन्** (मेटी भाषा) वि. यौन रूपमा आकर्षक

**ज्याक** / ज्याक् / (क.बो.) वि. ज्याङ्गो शरीर भएको

# झ

**झ्याल्चा** jhyalcha ना. नेपाल सम्बतको एघारौँ महिना 'यंला'को पूर्णिमाका दिन हुने येँयाः पुन्हिको एक दिन अगाडी पाटन (यल)को च्यासल क्वयेलाछिमा एक चपाःछेँमा हुने परम्परागत यौन लीला जसमा पर्दा पछाडीबाट दुई व्यक्तिहरू महिला र पुरुष बीचको विभिन्न आशनमा यौन सम्पर्कको नाटन देखाउँछ

# ट

**टङ्कोत्तेजना** Leg fetish [ टङ्क + उत्तेजना ] ना. कृत्रिमभुज् कामोत्तेजनाको प्रकार जसमा कुनै व्यक्तिको यौन उत्तेजना र सन्तुष्टिमा खुट्टा, तिघ्रा र घुँडाको संलग्नता हुन्छ

**टप** / टप् / top वि. (समयौनिक पुरुष यौन सम्बन्धमा) जुन पुरुषले यौन सम्पर्कको बेला आफ्नो शिश्न अर्को पुरुषको गुदद्वारमा छिराउँछ

**टप भर्स** / टप् भर्स् / top verse वि. (समयौनिक पुरुष यौन सम्बन्धमा) भर्स पुरुष जसलाई मुख्यतः टप भूमीका निर्वाह गर्न मन लाग्छ ; टप र बटम दुबै भूमीका निर्वाह गर्न सकेपनि बढी रूची टप भूमीकामा हुने पुरुष

**टमब्वाइ** tomboy (आ. अङ्ग्रेजी) वि. परम्परागत रूपमा पुरुषले गर्नुपर्छ भनिएको शैलीमा पहिरन लगाउने महिला ; परम्परागत

रूपमा नारीत्व झल्कने भनेर मानिएको आचरण मन-नपराउने र परम्परागत रूपमा पुरुषले गर्ने प्रकारको गेट-अपमा हुन मनपराउने महिला

**टा** (मेटीभाषा) हे. टाइचा

**टाइचा** (मेटी भाषा) ना. पुरुष

**टेपासी** (आ. दुमी) योनी

**टेप्की** (मेटी भाषा) ना. त्याचलिङ्गी महिला

**टोकन** token ना. (सामाजिक न्याय) १. कुनै उत्पीडित वा सिमान्कृत समूह वा वर्गबाट देखावटीका लागि मात्र सहभागी, समावेश र प्रतिनिधित्व गराइएका ; २. गर्ने इच्छा नभएर गर्नका निम्ति मात्र गरेको प्रवृत्तिमा कुनै सिमान्कृत, अल्पसङ्ख्यक वा उत्पीडित समूहबाट प्रतीकात्मक रूपमा सहभागी वा प्रतिनिधित्व गराइएका ; विशेष गरी थौरे र न्यून संख्यामा ताकि उनीहरू त्यहाँ भएर पनि शक्ति पदानुक्रममा कुनै ठोस कदम चलाउन सकिन्न

**टोकनवाद** tokenism ना. (सामाजिक न्याय) १. कुनै उत्पीडित वा सिमान्कृत समूह वा वर्गबाट देखावटीका लागि मात्र सहभागी, समावेश र प्रतिनिधित्व गराउने अभ्यास ; २. गर्ने इच्छा नभएर गर्नका निम्ति मात्र गरेको प्रवृत्तिमा कुनै सिमान्कृत, अल्पसङ्ख्यक वा उत्पीडित समूहबाट प्रतीकात्मक रूपमा सहभागी वा प्रतिनिधित्व गराउने अभ्यास जसमा विशेष गरी उक्त समूहबाट थौरे र न्यून संख्यामा प्रतिनिधित्व गराइन्छ ताकि उनीहरू त्यहाँ भएर पनि शक्ति पदानुक्रममा कुनै ठोस कदम चलाउन नसकून्

# ठ

**ठोक्नु** (क.बो.) यौन सम्पर्कमा कुनै अर्को व्यक्तिको योनी, गुदद्वार र मुखमा आफ्नो शिश्न छिराएर भित्र बाहिर गर्नु

# ड

**डिल्डो** dildo ना. कृत्रिम शिश्न

**डेट** / डेट् / date ना. १. प्रणयात्मक सम्बन्धको एक चरण जसमा दुई व्यक्तिहरू एक अर्काको बारेमा जान्न बुझ्न वा अझै जान्न र उनीहरू बीचको सम्बन्ध दीर्घकालीन रहन्छ कि रहँदैन वा उनीहरू एक अर्कासँग बस्न सक्छन् कि सक्दैनन् भनेर मूल्याङ्कल गर्ने हेतुले गर्ने घनिष्ठ भेटघाट ; २. प्रेम सम्बन्धमा रहेका दुई व्यक्तिको भेटघाट ; ३. प्रेम सम्बन्ध वा कुनै प्रतिबद्ध सम्बन्धमा नबसी शारीरिक निकटता वा रमाईलोका निम्ति दुई व्यक्ति बीचको सम्बन्ध ; ४. प्रेम सम्बन्धमा बस्न सकिन्छ कि सकिँदैन भन्ने मूल्याङ्कन गर्नका निम्ति दुई व्यक्ति बीचको भेटघाट

**डोप्** (मेटी भाषा) ना. शिश्न

# त

**तरल लैङ्गिकता भएका व्यक्ति** वि. हे. द्रवलिङ्गी

**तिरसाठी (६३) आशन** 69 position ना. एक प्रकारको यौन आशन जसमा दुई व्यक्तिहरू एक अर्काको यौनाङ्ग पट्टी आफ्नो मुख फर्कने गरी बसेर मुख मैथुन गर्छन्

**तिसि** clitoris (आ. नेपालभाषा) ना. भङ्गाकुर

**तुतु** १. (आ. स्युबा) योनी ;

२. (क.बो.) स्तन

**तुन्तुरो** (क.बो.) हे. तुरी

**तुरी** / तुरि / (क.बो.) ना. बच्चाहरूको शिश्न

**तृतियवादी** trinarist वि. तेस्रोलिङ्गी भनेर पहिचान गर्ने व्यक्तिहरूलाई स्वीकार्ने तर लैङ्गिकताको विविधतालाई विरोध गर्ने, पारलिङ्गी र गैर-द्वयसांखिक लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई घृणा गर्ने; तीनवटा लिङ्गको संकीर्ण परिभाषामा विश्वास गर्ने; पारलिङ्गी महिलालाई महिला, पारलिङ्गी पुरुषलाई पुरुष नगन्ने, महिला र पुरुषको त्याचलिङ्गी केन्द्रित धारणा बोक्ने (द्वयसांखिक लैङ्गिक व्यवस्थाको विरोध गरेपनि), अरु गैर-द्वयसांखिक लैङ्गिक पहिचान जस्तै द्रवलिङ्गी, क्वयेरलिङ्गी, गैरानुरूपलिङ्गी, अलिङ्गी, दुईलिङ्गी, मिश्रितलिङ्गी, इत्यादीलाई नस्वीकार्ने

**तेस्रोलिङ्गी** third gender ना. दक्षिण एसियाली ( श्रीलङ्का बाहेक) महिला र पुरुष भन्दा फरक मानिने अथवा महिला र पुरुषको परिभाषा भन्दा फरक र भिन्न भनी पहिचान गर्ने व्यक्तिहरू ; महिला पनि होइन र पुरुष पनि होइन एवं आफू तीभन्दा छुट्टै रहेको पहिचान गर्ने व्यक्तिहरू

**त्याचपुरुष्याउनिक** cinesexual ना. त्याचलिङ्गी पुरुष तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

**त्याचमहिल्याउनिक** cindrosexual ना. त्याचलिङ्गी महिला तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

**त्याचरट** / त्याचरट् / cispeating [ त्याच + रटनं ] जब कुनै पारलिङ्गी वा गैर-द्वयसांखिक व्यक्ति टिप्पणी वा विचार प्रकट गर्छ, ती टिप्पणी वा विचारलाई महत्व नदिनु, तर त्यही टिप्पणी वा विचारलाई कुनै त्याचलिङ्गी व्यक्तिले दोहोर्याएमा त्यसलाई धेरै भाउ दिनु वा अझै मान्य पुष्टि गर्नु ( उदा. हामी पारलिङ्गीहरूको अधिकार सुनिश्चित गर्न भनी संसदमा त्यत्रो अनुरोध गरेँ कसैले वास्ता गरेन, तर त्यही संसदको एक त्याचलिङ्गी पुरुष संसदले सोही कुरा भन्दा समितिको ध्यानाकर्षण भयो )

**त्याचलिङ्गी** (आ. त्याच - मिल्दो / अनुरूप, मराठी) cisgender वि. कुनै व्यक्ति जसको जैविक लिङ्ग र लैङ्गिक पहिचान संरेखित हुन्छ वा समाजको अपेक्षा अनुसार मेल खान्छ

- **पुरुष** cisman व्यक्ति जसको जैविक लिङ्ग पुलिङ्गी र लैङ्गिक पहिचान पुरुष हुन्छ

- **महिला** ciswoman व्यक्ति जसको जैविक लिङ्ग स्त्रीलिङ्गी र लैङ्गिक पहिचान महिला हुन्छ

- **मुग्धी** cissexism मानवतामा त्याचलिङ्गी व्यक्तिहरू मात्र हुन्छ, वा त्याचलिङ्गी व्यक्तिहरू मात्र 'सामान्य' हुन् र यस बाहेकका लैङ्गिकताहरूलाई असामान्य मानेर अपहेलना तथा विभेद गर्ने संकुचित मान्यता

- **मुग्ध** cissexist मानवतामा त्याचलिङ्गी व्यक्तिहरू मात्र हुन्छ, वा त्याचलिङ्गी व्यक्तिहरू मात्र 'सामान्य' हुन् र यस बाहेकका लैङ्गिकताहरूलाई असामान्य मानेर अपहेलना तथा विभेद गर्ने संकुचित मान्यता भएका व्यक्तिहरू

- **केन्द्रित धारणा** ciscentrism त्याचलिङ्गी व्यक्तिहरूलाई मात्र हुने गरी वा मूलधारका संवादहरू त्याचलिङ्गीका निम्ति मात्र हुनु र जुनसुकै पनि व्यवस्था त्याचलिङ्गी व्यक्तिहरूका वरपर मात्र घुम्नु, जसले विशेषतः त्याचलिङ्गी बाहेकका व्यक्तिहरूलाई मध्यनजरमा राख्दैन वा गन्दैन

**त्याचव्याख्या** cissplain [ त्याच +व्याख्या ] ना. त्याचलिङ्गी अभिभावकात्मक वर्णन ; कुनै त्याचलिङ्गी व्यक्तिले पारलिङ्गी र गैर-द्वयसांखिक व्यक्तिहरूप्रति आफ्नो श्रेष्ठता जताउने हिसाबले दयालु भएर टिप्पणी दिनु वा व्याख्या गर्नु जसबारे ऊ भन्दा उसले व्याख्या गरिरहेको व्यक्ति नै जान्ने वा विज्ञ छ ; त्याचलिङ्गी श्रेष्ठता देखाउन वा जताउनका निम्ति नै अति-आत्मविश्वासका साथ पारलिङ्गी वा गैर-द्वयसांखिक व्यक्तिलाई दिइने व्याख्या वा अर्ती ; आफ्नो त्याचलिङ्गी विशेषाधिकारको केन्द्रमा रहेको दृष्टिकोणबाट कुनै पारलिङ्गी वा गैर-द्वयसांखिक व्यक्तिलाई अर्ती दिनु ; त्याचलिङ्गीमुग्धी पितृसत्तत्मक समाजमा त्याचलिङ्गी व्यक्तिहरूले आफूले सबै जानेको भनी ज्ञान नभएका विषयमा पनि आफ्नो श्रेष्ठता जताउनका निम्ति पारलिङ्गी वा गैर-द्वयसांखिक व्यक्तिलाई व्याख्या गर्ने वा अर्ती दिने प्रवृत्ति, जुन अक्सर हाम्रो सामाजिकरणले भित्री जडा गाडिदिएको हुन्छ र यस्ता प्रवृत्ति समान्यीकरण भइजान्छ

**त्याचस्थिरदृष्टि** cisgaze [ त्याच + स्थिर + दृष्टि ] १. पारलिङ्गी तथा गैर-द्वयसांखिक व्यक्तिहरू सहित संसार र संसारका सबै विषयवस्तु प्रति त्याचलिङ्गी व्यक्तिको नजर र दृषिकोणलाई मुख्य वा पूर्वनिर्धारित सर्वमान्य दृष्टिकोणका रूपमा लिनु ; २. पारलिङ्गी र गैर-द्वयसांखिक व्यक्तिहरूले समाजमा भोग्नुपर्ने उत्पीडनलाई नजर अन्दाज गरी त्याचलिङ्गी विशेषाधिकारको मूल्यांकन नगरी त्याचलिङ्गीमुग्धी विचारमा आधारित सामाजिक पदानुक्रममाई सिरोपर गर्ने दृष्टिकोण ; ३. जुनसुकै विषयवस्तुलाई हेर्ने, मूल्याङ्कन गर्ने वा व्याख्या गर्ने दृष्टिकोणमा त्याचलिङ्गीमुग्धी नजरलाई प्रमुख, उच्च र सर्वमान्य स्थान दिने प्रवृत्ति

**त्रयसहभागित्व यौन सम्पर्क** threesome ना. तीन जना व्यक्तिको संलग्नतामा हुने यौन सम्पर्क

**त्रयसांखिक** / त्रयसाङ्खिक् / trinary [त्रय + संख्या + इक ] वि. तीन संख्याको

**त्रयसांखिक लैङ्गिक व्यवस्था** gender trinary ना. तीनवटा लैङ्गिकतालाई मात्र मान्यता दिने सामाजिक वा कानुनी व्यवस्था

# थ

**थपूक्वपू यौन** missionary position (आ. नेपालभाषा : थपूक्वपू : उत्तनो परेको, घोप्टो

परेको) ना. यौन सम्पर्कमा एक व्यक्ति आफ्नो ढाडमा अडेर पल्टने भने अर्को व्यक्ति त्यसमाथी चढेर योनी शिश्नमा प्रवेश गराउने

**थिरुनङङ्** (आ. गुजराती) ना. भारतको तमिल नाडू राज्यमा पारलिङ्गी महिलाहरूलाई जनाइने शब्द

**थुवात्सत्ता** kyriarchy (आ. नेपालभाषा : थुवाः - मालिक) ना. प्रभुत्व, अत्याचार, दमन र गुलामीको आधारमा निर्मित अन्तरसम्बन्धित सामाजिक व्यवस्था ; लिङ्गभेद, रङ्गभेद, अपाङ्गताविरोधी, समयौनिक विरोधी, पारलिङ्गी विरोधी, वर्गवादी, विदेशी प्रति घृणा, आर्थिक अन्याय, उपनिवेशवाद, सैन्यवाद, लगायतका पदानुक्रमिक व्यवस्था जसमा शक्तिको असामान बाँढफाँड हुन्छ र कुनै समूहको उत्पीडन निम्त्याउने सामाजिक संस्थाको अन्तर्जाल

# द

**दम्पत्ती** spouse ना. १. वैवाहिक सम्बन्ध कायम गरेका दुई व्यक्ति ; २. आफूले वैवाहिक सम्बन्ध बाँधेको अर्को व्यक्ति

**दर्शनोत्तेजना** voyeurism ना. अरुहरू यौन सम्पर्क गरिरहेको वा लुगा फुकालीरहेको हेरेर आनन्द प्राप्ती गर्ने अभ्यास वा चाहना

**दलित महिला विरोधी** misogylit वि. दलित महिला प्रति विभेदकारी मानिसिकता भएको ; दलित भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

**दाइ भेना** ना. आफ्नो दाइ र उसको श्रीमान्

**दिदी भाउजु** ना. आफ्नो दिदी र उसको श्रीमती

**दिलबर** beloved (आ. फारसी) ना. आफूले प्रेम गरेको व्यक्ति

**दुईलिङ्गी** bigender [ दुई + लिङ्ग + ई ] वि. महिला र पुरुष दुबै हुँ भनी पहिचान गर्ने व्यक्ति

**दूद** / दुद् / breasts ना. स्त्रीलिङ्गी व्यक्तिहरूको स्तन जसमा दुध उत्पादन गर्ने ग्रन्थी हुन्छ

**दूदको मुन्टो** nipples ना. स्तनको सतहमा उँभोठेको कोषाणु तह

**दृश्योत्तेजना** [ दृश्य + उत्तेजना ] Eye fetish ना. कृत्रिमभुज् कामोत्तेजनाको प्रकार जसमा कुनै व्यक्तिको यौन उत्तेजना र सन्तुष्टिमा आँखाको संलग्नता हुन्छ

**देहाकृति** body image ना. सौन्दर्य र शरीरको आकर्षण सम्बन्धी मानिसको धारणा

**दोहोरी खेल्नु** (मेटी भाषा) समयौनिक पुरुषहरूमा भर्स भूमीका निर्वाह गर्नु ; (समयौनिक पुरुषमा) आफ्नो शिश्नलाई अरुको गुदद्वारमा छिराउने र आफ्नो गुदद्वारमा पनि अरुको शिश्न छिराउने दुबै गर्नु

**दोहोरोभेदन** double penetration [ भेदन - छिराउने कार्य ] ना. एक व्यक्तिको योनी वा गुदद्वारमा दुईवटा शिश्न एकैपटक प्रवेश गराएर गर्ने यौन सम्पर्क ; अक्सर एकपटकमै एकजनाले योनीमा छिराउने र अर्कोले गुदद्वारमा छिराएर गर्ने

यौन सम्पर्क, वा दुईवटा शिश्न एकैपटक एउटै योनीमा छिराएर गरिने यौन सम्पर्क

**दौंतरी** ally ना. (सामाजिक अभियानका क्षेत्रमा) कुनै वा विभिन्न पृष्ठभूमीका आधारमा विशेषाधिकार भएका वा लाभान्वित समूह वा वर्गको व्यक्ति जसले उक्त सामाजिक उत्पीडनको इतिहास, मर्म र प्रणाली र आफ्नो विशेषाधिकारलाई बुझेर त्यसको विरोध गरी उत्पीडित समूहको हकका निम्ति बोल्छ वा गर्छ

**द्रवयौनिक** / द्रवयौनिक् / sexually fluid person (तत्स.) [ द्रव + यौन + इक ] वि. यौन अभिमुखिकरण एवं यौनिकताका मामिलामा तरल भावना भएका व्यक्तिहरू ; एउटा निश्चित लैङ्गिकता तर्फ मात्र आकर्षित नहुने र यो भावना तरल रहने, कहिले कुनै लैङ्गिकता(हरू) तर्फ आकर्षित भए कहिले कुनै लैङ्गिकता(हरू) तर्फ हुने व्यक्तिहरू

- **व्यक्ति प्रति घृणा** fluophobia ना.

**द्रवयौनिकता** fluid sexuality (तत्स.) [ द्रव + यौन + इक + ता ] ना. एउटा निश्चित लैङ्गिकता तर्फ मात्र आकर्षित नहुने र यो भावना तरल रहने, कहिले कुनै लैङ्गिकता(हरू) तर्फ आकर्षित भए कहिले कुनै लैङ्गिकता(हरू) तर्फ हुने

**द्रवलिङ्गी** gender fluid [ द्रव - तरल, + लिङ्ग + ई ] ना. पुरुषत्व देखि नारीत्वबीच झुलि रहने तरल स्वभावको लैङ्गिकता भएका व्यक्ति ; द्रवलिङ्गी व्यक्तिहरू कहिले आफूलाई एकदमै पुरुष जस्तै अनुभव गर्छन्, कहिले एकदमै महिला जस्तो अनुभव गर्छन् वा कहिले दुबै जस्तो अनुभव गर्छन् र उनीहरूको लैङ्गिकता तरल रहन्छ

- **व्यक्ति प्रति घृणा** fluophobia ना.

**द्रप्रणयात्मक अयौनिक** biromantic asexual ना. दुईटा लैङ्गिकता भएका व्यक्तिहरू प्रति प्रणयात्मक भावना हुने अयौनिक व्यक्तिहरू

**द्वयसांखिक** / द्वयसाङ्खिक् / binary [ द्वय + संख्या + इक ] वि. दुई संख्याको

**द्वयसांखिक लैङ्गिक व्यवस्था** gender binary ना. दुईवटा लैङ्गिकतालाई मात्र मान्यता दिने सामाजिक वा कानुनी व्यवस्था

**द्वयौनात्मक प्रणय** biromantic [ द्व + यौन + आत् + मक ] वि. दुईवटा लैङ्गिकता तर्फ महसुस हुने प्रणयात्मक भावना

**द्वयौनिक** / द्वयौनिक् / bisexual (तत्स.) [ द्व + यौन + इक ] वि. दुई वटा लैङ्गिकता तर्फ आकर्षित व्यक्ति

- **व्यक्ति प्रति घृणा** biphobia ना.
- **महिला विरोधी** bimisogyny ना.

द्वयौनिक महिला प्रति विभेदकारी मानिसिकता भएको ; द्वयौनिक भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

**द्वयौनिकता** bisexuality (तत्स.) [ द्व + यौन + इक + ता ] ना. दुई वटा लैङ्गिकता प्रति आकार्षण हुनु

**द्वितिय यौन विशेषता** secondary sex characteristics ना. आफ्नो जैविक लिङ्ग अनुसारका ती शारीरिक विशेषताहरू जुन किशोरावस्थामा विकास हुन थाल्छ

**द्वौउत्कण्ठित** / द्वौउत्कन्ठित् / bi-curious [ द्व + उत् + कण्ठ + इत् ] ना. कुनै विषयमयौनिक

व्यक्ति जसलाई समयौनिक सम्बन्ध वा अनुभव राखी हेर्ने वा प्रयास गर्ने इच्छा छ

# ध

**धारुमैथुन** fellatio [ धारु - sucking + मैथुन ] ना. एक प्रकारको मुख मैथुन जसमा एक व्यक्तिले अर्को व्यक्तिको शिश्नलाई मुख र गलाको प्रयोगले यौन सन्तुष्टी प्रदान गर्दछ

**धुरोह यौन सम्पर्क** pegging [ धुर् - कुनै लाम्चो ठाडो वस्तु+ रोहः - चढ्नु ] ना. एक प्रकारको यौन अभ्यास जसमा महिलाले कृत्रिम शिश्न (डिल्डो)लाई कम्मरमा बाँधेर पुरुषको गुदद्वारमा छिराउँछ

**धुर्नु** (मेटी भाषा) यौन सम्पर्क राख्नु

# न

**नकचरा** shameless वि. लाज नलाग्ने मान्छे ; लाजको अनुभूती नगर्ने व्यक्ति

**नखुल्नु** to remain in closet (क्वयेर व्यक्तिहरूको सवालमा) : आफू क्वयेर विविधता अन्तर्गत पर्दछ भन्ने विषय अरु व्यक्ति(हरू)लाई नभन्नु, नबताउनु वा नखुलाउनु

**नगण्यकरण** trivialize ना. कुनै विषयवस्तु, मुद्दा वा घटनालाई वास्ता गर्न योग्य वा गम्भीर रूपमा नठान्ने ; कुनै मुद्दालाई ध्यान दिन वा मुद्दा हो भनी मान्न गन्न आवश्यक नठान्नु

**नग्न नृत्यगृह** strip club ना. एकप्रकारको मनोरञ्जन स्थल जहाँ कलाकारहरूले यौन मनोरञ्जन प्रदान गर्ने र विवस्त्रनृत्य लगायतका कामुक नृत्य तथा प्रदर्शन गर्ने गर्दछन्

**नरमतापूर्वक यौन सम्पर्क** softcore sex (तत्स.) ना. सामान्यतः धेरै शक्ति नलगाई वा कुनै जङ्गली स्वभाव नदेखाई, विशद नभएको, कठोर नभइकन गरिने यौन सम्पर्क

**नाजुकुमार** broflake (आ. नेपालभाषा) ना. आफ्नो पुरुष विशेषाधिकार र पुरुष भएकै कारणले पितृसत्तात्मक समाजमा पाउने शक्तिको अनुभूती घटेको वा आफूबाट गुमेको वा आफूले हक जमाउन नपाएको विषयमा अपमानित वा उदासिन हुने, अनावश्यक रूपमा अतिसंवेदनशील पुरुष

**नाट्यगुरु राजा** drag king ना. महिलाहरू जो परम्परागत रूपमा पुरुषको भनिएका पहिरण लगाएर पुरुष आदर्शरूप ग्रहण गर्दछन् ; तडकभडक भद्दा किसिमले पुरुषको पहिरण र गेट-अपमा रहेका कला प्रस्तुत गर्ने व्यक्तिहरू

**नाट्यगुरु रानी** drag queen ना. पुरुषहरू जो परम्परागत रूपमा महिलाको भनिएका पहिरण लगाएर महिला आदर्शरूप ग्रहण गर्दछन् ; तडकभडक भद्दा किसिमले महिलाको पहिरण र गेट-अपमा रहेका कला प्रस्तुत गर्ने व्यक्तिहरू

**नाठी सार्धम् यौन** cuckold ना. १. आफ्नो श्रीमती वा महिला यौन साथीलाई अर्को महिलासँग यौन सम्पर्क गर्न लगाएर आफूले

त्यसलाई हेरी यौनानन्द लिनू ; २. कुनै व्यक्तिले आफ्नो श्रीमती वा केटीसाथीलाई अर्को महिलासँग मिलेर यौन सम्पर्क गर्नु; ३. आफ्नो श्रीमती वा केटीसाथीलाई अर्को महिलासँग यौन सम्पर्क गरेको आफूले हेरेर हस्तमैथुन गरी सन्तुष्टी प्राप्त गर्नु

**नाठो सार्धम् यौन** cuckold ना. १. आफ्नो श्रीमती वा महिला यौन साथीलाई अर्को पुरुषसँग यौन सम्पर्क गर्न लगाएर आफूले त्यसलाई हेरी यौनानन्द लिनू ; २. कुनै व्यक्तिले आफ्नो श्रीमती वा केटीसाथीलाई अर्को पुरुषसँग मिलेर यौन सम्पर्क गर्नु; ३. आफ्नो श्रीमती वा केटीसाथीलाई अर्को पुरुषसँग यौन सम्पर्क गरेको आफूले हेरेर हस्तमैथुन गरी सन्तुष्टी प्राप्त गर्नु

**नाबालिग यौन दुर्व्यवहार** ना. कुनै पनि वयस्क वा युवा व्यक्तिले नाबालिक मानिस वा बच्चालाई यौन आश्यबाट यौन उत्तेजनाका निम्ति गर्ने जुनसुकै कृयाकलाप ( बच्चाहरू सहमती दिन योग्य हुँदैन, जुनसुकै अवस्था, स्थिति वा हालमा नाबालिगहरू प्रति बालिगहरूले गर्ने यौन व्यवहार : दुर्व्यवहार र हिंसा नै हो )

**नारी** (तद.) ना. महिला ; महिलालाई जनाउने प्रयोग गरिने शब्द, यस शब्दको सम्बन्ध परम्परागत रूपमा महिला कस्तो हुनु पर्छ भन्ने आचरणात्मक गुणसँग सम्बन्धित छ

**नुनि** (मेटी भाषा ) : सानो

**नैचरा** (मेटी भाषा) नराम्रो

**न्ह्यसनापासा** nhyasanāpāsā (आ. नेपालभाषा) ना. सामाजिक अभियानका क्षेत्रका भेटेका र चिनेका व्यक्ति जो तपाइँको साथी वा सहकर्मी होइनन् ; सामाजिक अभियानका क्रमा भेटेर चिनेका ती व्यक्ति जोसँग अभियानका क्रम र विषयमा सँगै काम गरिन्छ र अभियान आवश्यकताहरूमा मात्र अन्तर्क्रिया हुन्छ

# प

**परिवर्तनात्मक समय** transition ना. (पारलिङ्गी व्यक्तिहरूको सवालमा) पुलिङ्गीबाट स्त्रीलिङ्गी वा स्त्रीलिङ्गीबाट पुलिङ्गी परिवर्तनका विभिन्न प्रकृया दौरान

**परिवार नियोजन** family planning ना. बि पारिवारिक जीवनलाई स्वस्थ र व्यवस्थित बनाउन वा बनाइराख्नका निम्ति गर्भधारण, सन्तान जन्माउने , आफू कति उमेरमा बच्चा जन्माउने, एक बच्चा र अर्को बच्चा बीच कति जन्मान्तर गर्ने, आफ्नो सन्तानको हेरचाह तथा शिक्षा दिक्षालाई व्यवस्थापन कसरी गर्ने जस्ता पारिवारिक संरचना र संचालन सम्बन्धी बनाइने योजना

**पाठेघर** / पाठेघर् / uterus / womb ना. गर्भाशय ; स्त्रीलिङ्गी प्रजनन प्रणालीमा हर्मोन उत्पादनको उत्तरदायि जुन अङ्गमा निषेचित डिम्ब भ्रुणमा विकास हुन्छ

**पारपुरुष्याउनिक** trandrosexual ना. पारलिङ्गी पुरुष तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

**पारमहिल्याउनिक** tragysexual ना. पारलिङ्गी महिला तर्फ यौन र प्रणयात्मक आकर्षण भएका व्यक्ति

**पारलिङ्गी** transgender [ पार + लिङ्ग + ई ] वि. कुनै व्यक्ति जसको लैङ्गिक पहिचान जैविक लिङ्ग भन्दा विपरीत वा फरक हुन्छ अथवावा समाजको अपेक्षा अनुसार बेमेल खान्छ

- **पुरुष** transman व्यक्ति जसको जैविक लिङ्ग स्त्रीलिङ्गी र लैङ्गिक पहिचान पुरुष हुन्छ

- **महिला** transwoman व्यक्ति जसको जैविक लिङ्ग पुलिङ्गी र लैङ्गिक पहिचान महिला हुन्छ

- **व्यक्ति प्रति घृणा** transphobia ना.

- **महिला विरोधी** transmisogyny ना. पारलिङ्गी महिला प्रति विभेदकारी मानिसिकता भएको ; पारलिङ्गी भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

- **संहार** transocide ना. पारलिङ्गी भएकै कारण लैङ्गिकता आधारमा घृणाले प्रेरित हत्या

**पारलिङ्गी ल्यूल्यूमि** trans chaser (आ. नेपालभाषा : ल्यूल्यूमि : पछिपछि लाग्ने व्यक्ति ) ना. त्यस्ता त्याचलिङ्गी व्यक्तिहरू जो पारलिङ्गी व्यक्तिहरू प्रति यौनिक रूपमा आकर्षित छन् तर पारलिङ्गी व्यक्तिहरूलाई परदेशिन् र केवल एक अन्धकार रहस्य वा यौन तृप्ती पूरा गर्ने साधन, वस्तुकरणको दृष्टिकोणले हेरिन्छ ; यो शब्द विशेष गरी पारलिङ्गी महिलाहरू बीच प्रयोग हुन्छ : जुन त्याचलिङ्गी पुरुषहरू आफूले पारलिङ्गी महिला मनपरेको भन्दै पारलिङ्गी महिलाहरूको पछिपछि लाग्छन् र पारलिङ्गी महिलाहरूलाई केवल यौन वस्तुको रूपम हेर्दछन् जो अक्सर पारलिङ्गी विरोधी वा अमैत्रीपूर्ण धारणा राख्ने एवं शोषणकारी र उत्पीडक व्यवहारको हुने गर्दछ

**पारलिङ्गी वहिष्कारी कट्टरपन्थी त्याचलिङ्गी महिला** Trans Exclusionary Radical Cisgender Women ना. ती त्याचलिङ्गी महिलाहरू जो पारलिङ्गी महिलाहरूलाई महिलाको मुद्दा र विषयवस्तुमा गन्दैनन् र पारलिङ्गी महिला लगायत पारलिङ्गीहरू प्रति घृणाको भावना राख्दछन् ; ( पारलिङ्गी वहिष्कारी कट्टरपन्थी महिलावादी भन्दा कसैलाई वहिष्कार गर्नु, लैङ्गिक पहिचानको आधारमा घृणा गर्नु वा वहिष्कार गर्नु महिलावादी सिद्दान्त विपरीत भएकाले, त्यस्ता त्याचलिङ्गी महिलाहरूले आफूलाई महिलावादी भनेर दाबी गरेपनि यस्ता व्यवहार र धारणा महिलावादी धारणा होइनन् भनेर यो शब्दावलीको सुरुवात भएको हो )

**पारलिङ्गी वहिष्कारी कट्टरपन्थी महिलावादी** Trans Exclusionary Radical Feminists ना. महिलावादी धारणामा पारलिङ्गी महिलाहरूलाई समावेश नगर्ने वा महिलावादलाई पारलिङ्गी अधिकारको विरुद्धमा उभ्याउन प्रयास गर्ने र महिलाका विषयमा पारलिङ्गी महिलाहरूलाई मान्यता नदिने महिलावादीहरू

**पारलिङ्ग्यौनिक** trans-attracted वि. पारलिङ्गी व्यक्ति तर्फ यौनिक वा प्रणयात्मक आकर्षण महसुस गर्ने

**पावैया** (आ. गुजराती) ना. भारतको गुजरात राज्यमा तेस्रोलिङ्गीहरूको एक समुदाय जसले बौचरा माताको मुख्य आराधना र भक्ति गर्छ

**पास हुनु** passing क्रि. (पारलिङ्गी व्यक्तिहरूको सवालमा) कुनै पारलिङ्गी व्यक्ति जसलाई हेरेर मात्र पारलिङ्गी भनेर चिन्न नसक्नु ; कुनै पारलिङ्गी व्यक्तिलाई देख्दा खेरी ऊ पारलिङ्गी हो भनेर ठम्याउन नसक्ने हुनु

**पिङ्की** (मेटी भाषा) पैसा

**पितृमञ्च** / पित्रिमन्च् / manel [ पितृ + मञ्च ] ना. पुरुषहरू मात्र हुने मञ्च ; कुनै कार्यक्रमको मञ्चमा पुरुष वक्ताहरू मात्र हुनु ; पुरुषहरू मात्र भएको मञ्च, र केही गरी महिला राखेमा पनि असमानमित संख्यामा र राख्नका लागि मात्र राखिएको, उक्त महिला(हरू)ले खुल्ला रूपमा विचार पोख्ने निरुत्साहित गर्ने ढङ्गको मञ्च चरित्र

**पितृमूलधार** / पित्रिमुलधार् / malestream ना. पुरुष दृष्टिकोणमा केन्द्रित वा नितान्त पुरुष दृष्टिकोणबाट कोरिएको आधारलाई सर्वोपयोगी वा सबैलाई लागू गर्न सक्ने मान्नु ; लिङ्गिक उत्पीडन र त्यसले सबै क्षेत्रमा निम्त्याएका असमानतलाई बेवास्ता गरी पुरुषहरूकै विशुद्द नजररियाबाट कोरिएका आधारहरूलाई सबै जनसंख्यामा लागू हुन सक्ने भनेर मान्नु

**पितृराज्य** andocracy ना. सरकार वा राज्य जसमा शासक वा राज्यमा उच्च पदका सबैजना पुरुष हुन्छन्, र महिला भएपनि असमानमित संख्या निर्णायक भूमीकामा प्रभाव पार्न नसक्ने वा राख्नका निम्ति मात्र राखिएको

**पितृवंशात्मक व्यवस्था** patrilineage ना. पुरुष वा पिताको वंशलाई सर्वोपरी मानिने सामाजिक व्यवस्था ; सामाजिक व्यवस्था जसमा कुनै वंशको निर्धारण नीजको पिता र पुरुषको वंशका आधारमा हुन्छ

**पितृसत्ता** patriarchy ना. सामाजिक संथा र व्यवस्था जसमा पुरुषहरू प्राथमिक शक्तिधारी हुन्छन् र राजनीतिक नेतृत्व, नैतिक अधिकार, सामाजिक विशेषाधिकार र सम्पत्तीको नियन्त्रमा हावी हुन्छन् ; पुरुषहरूलाई शक्तिको केन्द्र बनाउने सामाजिक व्यवस्था

**पिशाब** urine ना. चयापचय प्रकृयाबाट पानीमा घुलनशील रशायन पदार्थलाई फाल्न मृगौँलाबाट छानिएर उत्पादन हुने तरल पदार्थ

**पिसि** (आ. नेपालभाषा) योनी

**पीडोत्तेजना** algolagnia [ पीडा + उत्तेजना ] ना. शरीरको कामोत्पादनी क्षेत्रमा शारीरिक पीडा वा दुखाईबाट यौन उत्तेजना प्राप्त गर्ने प्रवृत्ति

**पीपी** (आ. स्युबा) शिश्न

**पीस्य** (आ. तामाङ) योनी

**पुइचु** (मेटी भाषा) ना. योनी

**पुती** (क.बो) ना. योनी

**पुदेस** MTF (सां) पुलिङ्गी देखि स्त्रीलिङ्गी

**पुम्सरट** / पुम्सरट् / hepeating [ पुंस + रटनं ] जब कुनै महिलाले टिप्पणी वा विचार प्रकट गर्छ,

ती टिप्पणी वा विचारलाई महत्व नदिनु, तर त्यही टिप्पणी वा विचारलाई कुनै पुरुषले दोहोर्याएमा त्यसलाई धेरै भाउ दिनु वा अझै मान्य पुष्टि गर्नु

**पुम्सव्याख्या** mansplain [ पुंस +व्याख्या ] ना. पुरुष अभिभावकात्मक वर्णन ; कुनै पुरुषले महिला र गैर-द्वयसांखिक व्यक्तिहरूप्रति आफ्नो श्रेष्ठता जताउने हिसाबले दयालु भएर टिप्पणी दिनु वा व्याख्या गर्नु जसबारे ऊ भन्दा उसले व्याख्या गरिरहेको व्यक्ति नै जान्ने वा विज्ञ छ ; पुरुष श्रेष्ठता देखाउन वा जताउनका निम्ति नै अति-आत्मविश्वासका साथ महिला वा गैर-द्वयसांखिक व्यक्तिलाई दिइने व्याख्या वा अर्ती ; आफ्नो पुरुष विशेषाधिकारको केन्द्रमा रहेको दृष्टिकोणबाट कुनै महिला वा गैर-द्वयसांखिक व्यक्तिलाई अर्ती दिनु ; पितृसत्ततमक समाजमा पुरुषहरू आफूले सबै जानेको भनी ज्ञान नभएका विषयमा पनि आफ्नो श्रेष्ठता जताउनका निम्ति महिला वा गैर-द्वयसांखिक व्यक्तिलाई व्याख्या गर्ने वा अर्ती दिने प्रवृत्ति, जुन अक्सर हाम्रो सामाजिकरणले भित्री जडा गाडिदिएको हुन्छ र यस्ता प्रवृत्ति समान्यीकरण भइजान्छ

**पुम्सस्थिरदृष्टि** mangaze [ पुंस + स्थिर + दृष्टि ] १. महिला तथा गैर-द्वयसांखिक व्यक्तिहरू सहित संसार र संसारका सबै विषयवस्तु प्रति पुरुषको नजर र दृषिकोणलाई मुख्य वा पूर्वनिर्धारित सर्वमान्य दृष्टिकोणका रूपमा लिनु ; २. महिला र गैर-द्वयसांखिक व्यक्तिहरूले समाजमा भोग्नुपर्ने उत्पीडनलाई नजर अन्दाज गरी पुरुष विशेषाधिकारको मूल्यांकन नगरी पुरुषको लैङ्गिकतामा आधारित सामाजिक पदानुक्रममाई सिरोपर गर्ने दृष्टिकोण ; ३. जुनसुकै विषयवस्तुलाई हेर्ने, मूल्याङ्कन गर्ने वा व्याख्या गर्ने दृष्टिकोणमा पुरुष नजरलाई प्रमुख, उच्च र सर्वमान्य स्थान दिने प्रवृत्ति

**पुम्सानुमोदन** / पुम्सानुमोदन् / bropropriating [ पुंस + अनुमोदन ] पुरुषहरूले महिलाहरूको विचार, धारणा, बौद्धिक सम्पत्तीलाई आफ्नो विचार, धारणा वा बौद्दिक सम्पत्ती जस्तै प्रस्तुत गरेर श्रेय लिने बानी

**पुयाङ्ग** ना. हे. पुलिङ्गी यौनाङ्ग

**पुरुष टङ्कास्तरण** manspreading [ टङ्क + आस्तरण ] ना. १. सार्वजनिक स्थान वा अरु व्यक्तिहरूसँग साझा हुनुपर्ने स्थानमा खुट्टा फट्याएर धेरै ठाउँ ओगट्ने बानि ; २. सार्वजनिक वा अरुसँग साझा गर्नुपर्ने स्थानमा महिलाहरूले आफ्नो सहजता स्वरूप खुट्टालाई राख्दा महिलाहरूलाई नानाथरीका लाञ्छना लगाउने वा महिलाको शोभा होइन भनेर बिल्ला उडाएको सामाजिक अवस्थामा पुरुषहरूले सार्वजनिक स्थानमा बढी ठाउँ ओगट्ने बानीलाई पनि सामानीकरण गरेको र महिलाहरूको लागि संकुचित स्थान मात्र उपलब्ध हुनु ; ३. पुरुषहरूले आफ्नो आवश्यकता भन्दा बढी स्थान ओगट्ने बानिलाई समाजले सामान्यिकरण गर्नु

**पुरुष पुरुष बीचको यौन सम्पर्क** Gay sex ना.

**पुरुष वाकवरोध** / पुरुस् वाक्-वरोध् / manterrupt [ वाक् + अवरोध ] १. अरुले कुरा राखिराख्दा पुरुषहरूले बीचमा अवरोध गर्ने प्रवृत्ति जुन पितृसत्तात्मक सामाजिकरणमा सामान्यतः पुरुषहरूले कुनै संवादमा आफ्नो कुराहरूले धेरै स्थान ओगट्दछ र विशेष गरी महिला र गैर-द्वयसांखिक व्यक्तिहरूका कुरा व्यक्त

गर्न दिँदैनन् ; २. महिलाहरूले आफ्नो विचार राख्नुलाई नराम्रो, असभ्य वा अर्थहीन ठान्ने महिलाविरोधी र पितृसत्तात्मक धारणा अनुरूप महिलाहरूले आफ्नो विचार पोख्दा बोल्दा बोल्दै बीचमा कुरा गरिदिने र महिलालाई कुरा गर्नै नदिने पुरुषहरूको प्रवृत्ति ; ३. महिलाहरूले आफ्नो विचार प्रस्फुटन गर्दा उक्त संवादको केन्द्र पुरुष छैनन् भने बीचमा टोकेर संवादलाई पुरुष केन्द्रित बनाउने प्रयत्न

**पुरुषत्व** masculinity ना. परम्परागत रूपमा पुरुष वा केटा मान्छेसँग जोडिएर हेर्ने व्यवहार र आचरणहरू

**पुरुषानुमोदन** [ पुरुष + अनुमोदन ] हे. पुम्सानुमोदन

**पुरुष्याउनिक** androsexual वि. पुरुष तर्फ यौनिक वा प्रणयात्मक आकर्षण हुने व्यक्ति ; पुरुषत्व झल्कने मानिस तर्फ आकर्षण महसुस गर्ने व्यक्ति

**पुरुष्याउनिकता** androsexuality ना. पुरुष तर्फ यौनिक वा प्रणयात्मक आकर्षण हुनु ; पुरुषत्व झल्कने मानिस तर्फ आकर्षण महसुस गर्नु

**पुलिङ्गी** male sex [ पु + लिङ्ग + ई ] ना. एक प्रकारको जैविक लिङ्ग जसको XY गुणसुत्र हुन्छ र शुक्रकीट उत्पादन गर्छ

- **यौनाङ्ग** male sex organs पुलिङ्गी व्यक्तिहरूको यौनाङ्ग

**पूर्ण्याउनिक** allosexual [ पूर्ण + यौन + इक ] वि. यौन चाहना र आकर्षणको अनुभूती गर्ने व्यक्ति ; जो अयौनिक होइन

**पूर्वक्रीडा** foreplay ना. यौन उत्तेजनाको चरम बिन्दु पुग्नका निम्ति वा प्रवेशात्मक यौन सम्बन्ध गर्न अघि उत्तेजना बढाउनका निम्ति वा कुनै यौन सम्पर्कको मुख्य कृया गर्न अघि अझै उत्तेजित पार्न गरिने कृयाकलाप

**पूर्वचित्रण** stereotype ना. कुनै व्यक्ति, वस्तु वा समूह बारे व्यापक रूपमा धरिएका निश्चित प्रकारको विचार वा उनीहरू बारे अति-सरलीकृत चित्रण

**पूर्वाग्रह** prejudice ना. वास्तविक अनुभव वा कारणमा निराधारित पूर्व-कल्पित धारणा ; कुनै विषयलाई अनुभव गर्नु वा जान्नु भन्दा अगाडी नै त्यस बारे राखिसकेको धारणा (उदा. कुनै एक विषमयौनिक व्यक्ति जसले अहिले सम्म कुनै समयौनिक व्यक्तिसँग कुराकानी गरेको वा भेटेकै छैन, तर समयौनिकहरू त यस्तो हुन्छ होला है भन्ने पूर्व-कल्पना र सामाजिक संकीर्णताकै आधारमा समयौनिक व्यक्तिहरू बारे धारणा बनाइहाल्ने )

**पोइ** (क.बो.) श्रीमान्

**पोइला जानु** क्रि. आफ्नो पुरुष प्रेमीसँग विवाह गर्नका निम्ति सामाजिक मान्यता अनुसार विवाह संस्कार पूरा नगरी अधिकांश अवस्थामा अरु कसैले थहा नपाउने गरी जानु वा भाग्नु

**प्याड** pad ना. महिनावारी हुँदा रक्तश्राबलाई सोख्नका निम्ति बनाइएका साधान

**प्रजनन** / प्रजनन् / reproduction (तत्स.) ना. कुनै जीवजन्तुले सन्तान उत्पादन गर्ने प्रकृया र प्रणाली

- **प्रणाली** reproductive system -

जीवजन्तुमा हुने यौन अङ्ग लगायतका अङ्गहरू जसको प्रयोग र भूमीकाले सन्तान उत्पादन गर्न सकिन्छ

**प्रणय** romance ना. अर्को व्यक्तिप्रति सब्बल आकर्षण, पारस्पारिक र घनिष्ठ चाहना हुनु ; प्रेमको भावना

**प्रत्यारोपित गर्भधारण** in vitro fertilization ना. वैज्ञानिक प्रविधिद्वारा मानव शरीर बाहिर कृत्रिम वातावरणमा पाठेघर डिम्ब र शुक्रकीटको मिलन गराई भ्रुणको विकास गरी केही समयमा मानिसको पाठेघरमा प्रत्यारोपण गरी सफल गर्भधारन स्थापना गर्ने

**प्रदर्शनोत्तेजना** exhibitionism ना. आफ्नो यौनाङ्ग वा गोप्य अङ्गलाई सार्वजनिक वा अर्ध-सार्वजनिक स्थानमा खोलेर देखाउनु ( आफ्नो आत्मीय सम्बन्ध भएको व्यक्ति वा दम्पत्तीको अगाडी वा निम्ति मात्र गरिएको गर्निंदैन )

**प्रभुता** dominant ना. (यौनिकताको क्षेत्रमा) कुनै पनि गुनुत्वरीडाष्टी प्रवृत्तिको यौन सम्पर्कमा प्रभुत्व जमाउने व्यक्तिको भूमीका निर्वाह गर्ने

**प्रवेशात्मक यौन सम्पर्क** penetrative sex (तत्स.) ना. यौनाङ्ग वा मुखमा शिश्न अथवा कुनै वस्तुको प्रवेश गराएर गरिने यौन सम्पर्कका विविधता ; योनी, गुदद्वार वा मुखमा शिश्न वा अरु कुनै वस्तुलाई छिराएर गरिने यौन सम्बन्ध

**प्रश्नऋक्त समय** questioning period ना. ( क्वयेर क्षेत्रमा ) आफ्नो लैङ्गिक पहिचान वा यौन अभिमुखिकरण बारे आफूले स्वःखोजी गर्दै आफू के हो भन्दै पत्ता लगाइरहेलो समयावधि

**प्रसव** birth ना. बच्चा जन्माउनु

**प्रस्तुती** ना. शिशु जन्मिने वा जन्माउने प्रकृया

**प्राथमिक यौन विशेषता** primary sex characteristics ना. आफ्नो जैविक लिङ्ग अनुसारका ती शारीरिक विशेषताहरू जुन जन्मँदै मौजूद हुन्छ

**प्रेम** / प्रेम् / ना. सबैभन्दा सरल सुख, सबैभन्दा गहिरो पारस्परिक स्नेह देखि उदात्त सद्गुण जस्ता सब्बल र व्यापक मनो-भावनात्मक स्थिति

# फ

**फलानी** (मेटी भाषा) स्तन

**फुलुमुलु** fulumulu ना. नेपालको पूर्वी हिमाली भेगमा सामाजिक मान्यताको महिला र पुरुष सँगैको अर्को लैङ्गिकता

**फोलोक मोलोक** folok molok ना. अधिकांश तिब्बती भाषा, नेपालको पश्चिमी हिमाली भाषा जस्तै ल्होवा, डोल्पो, इत्यादी भाषाहरूमा परम्परागत रूपले महिला र पुरुष बाहेक चिनिने अर्को लैङ्गिकता

**फ्लर्ट** flirt (आ. अङ्ग्रेजी ) ना. मौखिक वा लिखित संवाद साथै इशाराबाजी गर्दै प्रणयात्मक वा सुक्ष्म यौन भावना झल्काउने समाजिक यौनिक व्यवहार

# ब

**बटम** / बटम् / bottom वि. (समयौनिक पुरुष यौन सम्बन्धमा) यौन सम्पर्कको बेला जुन पुरुषले आफ्नो गुदद्वारलाई छिराउन दिन्छ

**बटम भर्स** / बटम् भर्स् / bottom verse वि. (समयौनिक पुरुष यौन सम्बन्धमा) भर्स पुरुष जसलाई मुख्यतः बटम भूमीका निर्वाह गर्न मन लाग्छ ; टप र बटम दुबै भूमीका निर्वाह गर्न सकेपनि बढी रूची बटम भूमीकामा हुने पुरुष

**बलात्कार** हे. बलाद्कार

**बलाद्कार** rape ना. एक वा एक भन्दा बढी मानिस(हरू)ले अरु एक वा एक भन्दा बढी मानिस(हरू)लाई निज वा उनीहरूको मञ्जुरी नलिई गरिने यौन सम्पर्क वा मञ्जुरी लिएर भए पनि अठार वर्ष भन्दा कम उमेरको कुनै नाबालिगलाई गरिने करणी वा होस ठेगानमा नरहेको अवस्थामा मञ्जुरी लिएर गरिने करणी

**बलाद्कारको संस्कृति** rape culture ना. यौन हिंसालाई सामान्यिकरण र नगण्यकरण गर्ने संकीर्ण र स्थिर सामाजिक प्रवृत्ति र धारणा

**बहिनी बुहारी** ना. आफ्नो बहिनी र उसको श्रीमती

**बहुयौनात्मक प्रणय** polyromantic [ बहु + यौन + आत् + मक ] ना. एक भन्दा बढी लैङ्गिकता तर्फ हुने प्रणयात्मक भावना

**बहुयौनिक** / बहुयौनिक् / polysexual (तत्स.) [ बहु + यौन + इक ] वि. धेरै लैङ्गिकता प्रति यौन आकार्षण हुने व्यक्ति ; एक भन्दा बढी लैङ्गिकता प्रति आकर्षित हुने

**बहुयौनिकता** polysexuality (तत्स.) [ बहु + यौन + इक + ता ] ना. एक भन्दा बढी लैङ्गिकता प्रति यौन आकार्षण हुनु

**बहुस्नेही** polyamory ना. संलग्न सबैको सहमती सहित एक भन्दा बढी व्यक्तिसँग माया, प्रणयात्मक वा आत्मीय सम्बन्ध राख्ने अभ्यास वा चाहना

**बाँध्यामैथुन** docking ना. एक प्रकारको यौन सम्पर्क वा यौन आनन्द लिने माध्यम जसमा एक व्यक्तिको शिश्नको टाउकोलाई अर्को व्यक्तिको शिश्नचर्ममा छिराइन्छ

**बाटुली** (मेटी भाषा) गुदद्वार

**बामिजं** (आ. नेपालभाषा) जन्मँदा पुलिङ्गी इङ्गित गरिएका पुरुष

**बामिसा** (आ. नेपालभाषा) जन्मँदा पुलिङ्गी इङ्गित गरिएका महिला

**बाह्यप्रसव** ectogenesis [ बाह्य + प्रसव ] ना. (मानिसहरूमा) वैज्ञानिक प्रविधिबाट कृत्रिम पाठेघर निर्माण गरेर कुनै मानव शरीर भन्दा बाहिर गरिने गर्भधारण र प्रसव

**बुङ्गाः यौनोत्सव** bunga bunga orgy [ आ. नेपालभाषा : बुङ्गाः - खेतबारीहरूमा पानी आफै जम्मा हुने खाल्डो (अङ्ग्रेजी शब्दसँग उच्चरण मिल्ने भएकाले ) ] ना. पानी, पौडी पोखरी वा नुहाउने टबमा गरिने यौनोत्सव

**बौद्धिक्याउनिक** sapiosexual [ बौद्दिक + यौन + इक ] वि. यौन आकर्षण वा प्रणयात्मक

आकर्षणका निम्ति शारीरिक विशेषताहरू भन्दा पनि बौद्दिक क्षमता महत्वपूर्ण रहने व्यक्तिहरू ; जो अरुको बौद्धिक क्षमताका आधारमा मात्र यौन आकर्षण महसुस गर्न सक्छन्

**ब्याउनु** क्रि. कुनै जनावर वा पशुले बच्चा जन्माउनु

**ब्लफ कल** / ब्लफ् कल् / ना. यौन दुर्व्यवहार गर्न गरिने फोन कल ; फोन यन्त्रको माध्यमबाट गरिने यौन दुर्व्यवहार

# भ

**भङ्गाकुर** clitoris ना. स्त्रीलिङ्गी व्यक्तिहरूको यौनाङ्गमा मूत्रद्वार भन्दा माथी अवस्थित बाहिरी रूपमा सानो मासुका डल्ला जस्तै देखिने सबैभन्दा संवेदनशील कामोत्पादनी अङ्ग जसको एक मात्र भूमीका यौन आनन्द प्राप्ती हो

**भर्स** / भर्स् / verse वि. (समयौनिक पुरुष यौन सम्बन्धमा) टप र बटम दुबै भूमीका निर्वाह गर्ने पुरुष

**भाइ ज्वाइँ** ना. आफ्नो भाइ र उसको श्रीमान्

**भाकासालेवालेवा** vakasalewalewa ( आ. फिजी ) ना. प्रशान्त महासागरको दक्षिणी भेगमा अवस्थित फिजी देशको संस्कृतिमा महिला र पुरुष सँगै मानिने अर्को लैङ्गिकता

**भेदामैथुन** fingering ना. औँला वा हातको प्रयोगले भङ्काकुर खेलाएर वा औँला योनीमा छिराएर उत्तेजना बढाउने वा यौन सन्तुष्टि प्राप्त गर्ने अभ्यास

**भ्रुण** / भ्रुन् / fetus ना. गर्भधारणका क्रममा पाठेघर स्थित नवजात ; शुक्रकीट र डिम्बको मिलन पछी पाठेघरमा विकास हुने नवप्राण जसको जन्म भएको छैन वा बच्चा होइन

# म

**मंगलामुखी** (आ. कन्नड भाषा) ना. भारतको कर्नाटक राज्यमा तेस्रोलिङ्गीहरूको एक समुदाय

**मञ्जुरी** ना. सहमती ; कसैलाई पूर्ण होसोहवासमा पूरा सूचना प्रदान गरेर कुनै विषयमा हुन्छ वा हुँदैन, हो वा होइन अथवा गर्छु वा गर्दिन भन्ने विचार लिनु ( यौन क्रियाकलापका निम्ति : १८ वर्ष भन्दा माथीका लागि मात्र )

**मतिना** ना. माया, प्रेम

**मतिना पारु** matinaa paaru ना. माया र प्रेमका निम्ति नेपाल सम्बतको दोस्रो महिना 'थिंला'को पूर्णिमा : यःमरि पुन्हिका भोली पल्ट प्रतिपदामा पर्ने पर्व

**मल** हे. दिसा

**मलद्वार** हे. गुदद्वार

**मलाशय** rectum ना. ठूलो आन्द्राको अन्तिम भाग जुन मलद्वारमा जोडिन्छ

**महत्वकांक्षी पारलिङ्गी** transcum ना. ती पारलिङ्गी व्यक्तिहरू जसले पारलिङ्गी व्यक्ति हुनका निम्ति यस्तै नै देखिनु पर्छ, यस्तै ढङ्गमा पोशाक लगाउनुपर्छ, लैङ्गिक वरिक्तताको

अनुभव हुनैपर्छ, यौन परिवर्तन प्रकृया गर्ने चाहना हुनै पर्छ भन्ने रूढीवादी परिभाषा स्थापना गरी त्यसमा नपर्ने पारलिङ्गी व्यक्तिहरूलाई लाञ्छना लगाउने वा पारलिङ्गी नै होइन भनिदिने

**महिनावारी** menstruation ना. रगत र गर्भाशयको आन्तरिक अस्तर वा भित्तामा परद जमाएको कोषाणुहरू योनीबाट निश्कासन हुने मासिक प्रकृया

**महिनावारी चक्र** menstrual cycle ना. महिनावारीमा रक्तश्राब देखि पाठेघरले डिम्ब निश्कासन गर्ने एक महिनाको पूर्ण प्रकृया चक्र

**महिमा दुलो** glory hole ना. एक प्रकारको यौन सम्पर्क जसमा संलग्न व्यक्तिहरू फरक कोष्ठा वा कोठाको विभाजमा हुन्छन् र उक्त विभाजन (विशेष गरी काठ रा भित्ता) मा दुलो बनाएर दुई अलग कोठा वा कोष्ठामा रहेर त्यस दुलो मार्फत यौन सम्पर्क गर्ने गर्छन्

**महिलावाद** feminism ना. सामाजिक तथा राजनीतिक अभियानको व्यापकता जसले लैङ्गिक समानताको स्थापनाका निम्ति लड्छ र पितृसत्तत्मक संयन्त्रलाई उन्मुलन गर्दै पितृसत्तात्मक संरचनामा महिलाहरूको उत्पीडनलाई केन्द्रमा राख्दछ

**महिलावादी** feminist ना. महिलावादी अवधारणा भएका मानिसहरू

**महिलाविरोधी**

- **धारणा** misogyny ना. महिला प्रति घृणा, विभेदकारी मानसिकता र पितृसत्तत्मक सोचबाट दीर्घस्थायी भएको पूर्वाग्रही धारणा

- **व्यक्ति** misogynist ना. महिला प्रति घृणा, विभेदकारी मानसिकता र पितृसत्तत्मक सोचबाट दीर्घस्थायी भएको पूर्वाग्रही धारणा भएको व्यक्ति

**महिलासंहार** femicide ना. महिला विरुद्ध लैङ्गिकता आधारमा घृणाले प्रेरित अपराध जसमा कसैलाई महिला भएकै कारणले हत्या गरिन्छ

**महिल्याउनिक** gynesexual वि. महिला तर्फ यौनिक वा प्रणयात्मक आकर्षण हुने व्यक्ति ; नारीत्व झल्कने मानिस तर्फ आकर्षण महसुस गर्ने व्यक्ति

**महिल्याउनिकता** gynesexuality ना. महिला तर्फ यौनिक वा प्रणयात्मक आकर्षण हुनु ; नारीत्व झल्कने मानिस तर्फ आकर्षण महसुस गर्नु

**मानव अधिकार** human rights ना. ती सिद्दन्त र नैतिक मूल्य मान्यताहरू जसले मानव व्यवहारका केही मापदण्डको व्याख्या गर्छ र कोही मानव भएको आधारमा प्राकृतिक र कानुनी रूपमा त्यसको संरक्षण गरिएको हुन्छ ; विश्वव्यापी, अन्तर्निहित, अविभाज्य, स्वतन्त्र, अविच्छेद्य, अन्तर्निर्भित र अन्तर्सम्बन्धित नैतिक सिद्दन्त र कानुनी रूपमा संरक्षित मूल्य जुन कसैले मानव भएको नातामा प्राप्त गर्दछ

**मामिजं** (आ. नेपालभाषा) जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका पुरुष

**मामिसा** (आ. नेपालभाषा) जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका महिला

**माया** love हे. प्रेम

**मायाको निशानी** hickey, love bite ना. ( निश्चित सन्दर्भमा ) चुम्बन वा शरीरको भागलाई चुस्नाले बस्ने निशानी वा अस्थायी दाग

**मारूनी maruni** ना. ( लैङ्गिक पहिचानको रूपमा ) मगर समुदायमा महिला र पुरुषको परिभाषा अन्तर्गत राख्न नचाहने व्यक्तिहरूले प्रयोग गर्ने एक लैङ्गिकता जनाउने शब्द

**मारूनी नाच** maruni dance ना. भर्खरका कलिला केटा मान्छेलाई केटीका परम्परागत लुगाहरू लगाएर मारूनी बनाई मादलको तालमा पुराना पौराणिक कथाहरूमा आधारीत गीतहरू गाएर नाचिने यो नाच नेपालका मगर, कुमाल, गुरुङ, तामाङ, लिम्बू जातीहरूको मुख्य संस्कृति

**मार्जन मैथुन** tribadism / scissoring [ मार्जनं + मैथुन ] ना. कुनै एक व्यक्तिले आफ्नो योनी र भङ्गाकुरलाई अर्को व्यक्तिको योनी र भङ्गाकुरमा दलेर, रगडेर वा घर्षण गराएर गर्ने यौन सम्पर्क

**मासि** (आ. नेपालभाषा) योनी

**मिखे** (आ. नेपालभाषा) महिला र पुरुष भन्दा पर

**मिथु** (आ. नेपालभाषा) महिला र पुरुषको बीचमा

**मिरु** (आ. नेपालभाषा) महिला र पुरुष कुनै नभएको

**मिश्रितलिङ्गित्व** androgyny ना. अस्पष्ट ढङ्गमा पुरुषत्व र नारीत्वको संयोजन

**मिश्रितलिङ्गी** androgyne [ मिश्रित + लिङ्ग + ई ] वि. पुरुष र महिला दुबैको मिश्रित स्वभाव र भावना भएका व्यक्ति

**मिश्र्याउनिक** annesexual ना. मिश्रितलिङ्गी व्यक्ति तर्फ यौन तथा प्रणयात्मक आकर्षण भएका व्यक्ति

**मिस्जं** (आ. नेपालभाषा) महिला र पुरुष दुबै

**मुख मैथुन** oral sex ना. एक प्रकारको यौन सम्पर्क जसमा यौन उत्तेजना बढाउन वा सन्तुष्टि प्राप्त गर्नका निम्ति मुख र जिब्रोको प्रयोग गरेर यौनाङ्ग चलाउने, दबाउने गरिन्छ

**मुखासीन् यौन अभ्यास** facesitting [ मुख + आसीन् ] ना. एक प्रकारको यौन अभ्यास जसमा एक व्यक्ति अर्को व्यक्तिको मुख वा अनुहारमा बसेर उक्त व्यक्तिलाई मुखमैथुन गराउँछ

**मुख्य प्रभावित जनसंख्या** key affected population ( एच.आइ.भि ) को उच्च जोखिममा पर्ने संख्या

**मूत्रथैली** urinary bladder ना. चयापचय प्रकृयाबाट पानीमा घुलनशील रशायन पदार्थलाई फाल्न मृगौंलाबाट छानिएर उत्पादन भएको तरल पदार्थ शरीरबाट बाहिर निश्कासन गर्नका निम्ति जम्मा हुने थैली

**मूत्रद्वार** urinary meatus ना. मूत्रथैलीबाट मूत्र नली भई र यौनाङ्गबाट मूत्र निश्कासन हुने द्वार

**मूत्रनली** urethra ना. मूत्रथैलीबाट पिशाबलाई मूत्रद्वार सम्म लग्ने नली

**मेइचेटी** (मेटी भाषा) ना. मेटी

**मेटा** (मेटी भाषा) ना. पारलिङ्गी पुरुष

**मेटी** (मेटी भाषा) ना. पारलिङ्गी महिला

**मेटी भाषा** metti slang ना. नेपालमा यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक आन्दोलनको सुरुवाती कालमा विशेष गरी पारलिङ्गी महिलाहरूको भेलारम्भ हुने क्रममा अरुले बुझ्न गाह्रो हुने गरी निर्माण गरिएको र बुझ्नलाई तालिम अप्राप्त मानिसहरूले सुन्दा बुझ्न नसक्ने ढङ्गले बोल्ने भाषाको तरिका

**मैंबाबु** (आ. नेपालभाषा) नेवाः समाजमा परम्परागत रूपले महिला र पुरुष सँगै मानिने अर्को लैङ्गिकता

**मैथुन** हे. यौन सम्पर्क

**म्ल्हे** (आ. तामाङ) योनी

**म्ल्हेगा** (आ. तामाङ) शिश्न

# य

**य.ल.अ.** GSM (सां.) यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक

**यचा** (आ. नेपालभाषा) यौन

**यान्त्रिक यौन कुराकानी** sexting ना. यन्त्र वा प्रविधिको प्रयोग गरेर यौन कुराकानीहरू गर्ने वा यौन तस्वीर पठाउने ; विशेषतः यन्त्र व प्रविधि मार्फत यौन चाहना पूरा गर्नका निम्ति साटिने यौनिक तस्वीर र अङ्कियाक्षरमा गरिने कुराकानी

**युवक** youth (masculine) ना. पुरुष युवा

**युवती** youth (feminine) ना महिला युवा

**युवा** youth ना. बालपन र वयस्कताको बीचमा रहेको उमेरावस्था ; संयुक्त राष्ट्र संघ अनुसार १५ वर्ष देखि २४ वर्षको उमेर अन्तर्गतका मानिसहरू

**युवौ** youth (non-binary) ना. गैर-द्वयसांखिक युवा

**योनिच्छद** hymen ना. योनिद्वारलाई पुरै वा आंशिक भागमा ढाकिएर रहेको पातलो झिल्ली

**योनी** vagina (तद. ) स्त्रीलिङ्गी प्रजनन अङ्ग प्रणालीको मांशापेशीयुक्त बाह्य अङ्ग जुन लचकदार हुन्छ, जुनद्वारबाट स्त्रीलिङ्गी व्यक्तिहरूमा महिनावारीको रक्तश्राब हुन्छ, बच्चा जन्मँदा निस्कन्छ र यौन सम्पर्कका क्रममा छिराइन्छ

**योनी मैथुन** vaginal sex ना. यौनाङ्ग वा शरीरको कुनै अङ्ग वा कुनै वस्तुलाई योनीमा छिराएर गरिने यौन सम्पर्क

**योनीरश स्खलन** female ejaculation / squirting / gushing ना. चरम आनन्द वा यौन आनन्दको शिखरमा पुगिसकेपछी योनीबाट तरल पदार्थको निष्कासन भई यौन सन्तुष्टी प्राप्त हुने

**योवन** / योबन् / मानिसको बाल्यकाल समाप्त भएर वृद्धावस्था नपुगुन्जेल सम्मको उमेर जसमा शारीरिक र यौन रूपले जोश जाँगर हुने गर्दछ

**यौ.रि.या.** SRP (सां.) यौनाङ्ग परिवर्तन प्रकृया

**यौ.रि.श.** SRS (सां.) यौनाङ्ग परिवर्तन शल्यक्रिया

**यौन** sex, sexual मानिसको यौनाङ्ग वा कामुकतासँग जोडिएको वा सम्बन्धित

- **आकर्षण** sexual attraction ना.

यौनिक वा कामुक रूपमा महसुस गरिने आकर्षण

- **आक्रमण** assault ना. शारीरिक हिंसा, कुटपीट वा भौतिक आक्रमणद्वारा मञ्जुरी बिना कसैसँग यौन व्यवहार गर्नु वा गर्ने प्रयास

- **आनन्द** sexual pleasure ना. यौन कृयाकलापले प्राप्त आनन्द

- **आशन** sex position ना. यौन सम्पर्क वा कृयाकलापका क्रममा मानिसको शरीरको विभिन्न स्थिति

- **इच्छा** हे. यौन चाहना

- **उत्तेजना** sexual arousal ना. यौन क्रियाकलापका बेलामा वा यौन क्रियाकलापको प्रत्याशामा हुने भावना वा चाहनाको उत्तेजना

- **उद्योग** sex industry ना. यौन सम्बन्धीका उत्पादन वा सेवाहरू प्रदान गर्ने व्यवसायहरू

- **कथा** sex story ना. यौन सम्पर्कका बारेमा लेखिएको, यौन सम्पर्क गरेको व्याख्या गर्ने कथा

- **कर्म** sex work ना. भुक्तानी सँग यौन सम्पर्क साटासाट गर्ने काम

- **कर्मी** sex worker ना. भुक्तानी सँग यौन सम्पर्क साट्ने व्यक्ति

- **कार्यस्थल** brothel ना. यौनकर्मीहरूको कार्यस्थल ; यौनकर्मीहरू व्यवसायका निम्ति बस्ने स्थल

- **कुस्पर्श** groping ना. कसैको मञ्जुरी बिना यौन आशयबाट कसैको अङ्ग छुनु, विशेष गरी सार्वजनिक स्थानमा वा भीडभाडमा अनिष्ट ढङ्गले छुनु

- **कृपा** sexual favour ना. केही उपकार गरेको बदलामा यौन कार्य गर्न माग गर्नु

- **खेलौना** sex toys ना. मानिसको यौन चाहना पूरा गर्न वा मानिसलाई यौन आनन्द प्राप्त गर्ने हेतुले बनाइएका खेलौनाहरू

- **चलचित्र** porn ना. यौन कृयाकलाप गरेको देखाउने चलचित्र ; यौन उत्तेजना बढाउने हिसाबले वा यौन आनन्द प्राप्त गर्ने हिसाबले हेर्नलाई बनाएका यौन सम्पर्कका चलचित्र

- **चलचित्र हल** adult movie theatres ना. यौन चलचित्र प्रदर्शनका निम्ति खोलिएका हल

- **चाहना** sexual desire ना. यौन सम्पर्क राख्ने वा यौन कृयाकलाप गर्ने चाहना वा इच्छा

- **दुराचार** sexual misconduct ना. सहमती बिना गरिने जुनसुकै प्रकारको यौन आश्यका कृयाकलापहरू

- **दुर्व्यवहार** sexual abuse, molestation ना. अर्को व्यक्ति प्रति नीजको मञ्जुरी बिना बलजफ्ती वा जबरजस्ती यौन व्यवहार गर्नु वा गर्ने प्रयास

- **नाटक मञ्चन** sex drama ना. मञ्चमा यौन कृयाकलाप देखाई गरिने नाटन

- **पर्यटन** sex tourism ना. यौन व्यवसायका सेवा प्राप्त गर्न गरिने पर्यटन

- **पसल** sex shop ना. यौन सम्बन्धीका सामाग्रीहरू जस्तै कृत्रिम यौनाङ्ग, यौन खेलौना, यौन चलचित्रका सिडि, इत्यादी बेच्ने पसल

- **विशेषता** sex characteristics ना. आफ्नो जैविक लिङ्ग अनुसारको शारीरिक विशेषताहरू

- **वस्तुकरण** sexual objectification ना. कुनै पनि मानवलाई यौन आन्दन्द प्राप्त गर्ने वस्तुको दर्जामा हर्ने दृष्टिकोण वा व्यवहार ; एक मानिसको आत्मसम्मान र प्रतिष्ठालाई बेवास्ता गरी वा उपेक्षा गरी केवल यौन चाहना पूर्ती गर्ने वस्तुका रूपमा हेर्नु र व्यवहार गर्नु

- **व्यवसाय** sex business ना. यौन उत्पादन र सेवा प्रदान गर्ने व्यवसाय

- **व्यवसाय बिचौलिया** pimp ना.

यौनकर्मीसँग सेवा लिन चाहने व्यक्तिलाई यौनकर्मी भेटाइदिने मान्छे

- **व्यवहार** sexual behaviour ना. मानिसहरूको यौन सम्पर्क राख्ने व्यवहार र आचरण ; मानिस कुन ढङ्गले यौन सम्पर्कमा संलग्न हुन्छ भन्ने विषय

- **सकरात्मकता** sex positivity ना. यौनिकता बारे सामाजिक धारणा र सांस्कृतिक मान्यता जसले यौन विषयहरूलाई कुठित वा अत्यन्तै नराम्रो, फोहोर, पाप वा वर्जित भनेर हेर्दछ, त्यस्ता मान्यतहरूलाई परिवर्तन गरी यौन सम्बन्धी व्यक्तिगत स्वयत्तता, सुरक्षित यौन सम्पर्क विधि, सहमतीय यौन सम्पर्क ( कुनै हिंसा र बलजफ्ती रहित ) मानव जीवनको प्राकृतिक र स्वस्थ्य पाटो हो भन्ने मान्यता वा विचारधारा

- **संक्रमण** sexually transmitted infections ना. असुरक्षित यौन सम्पर्कको माध्यमबाट सर्ने संक्रमणहरू

- **सम्पर्क** sexual contact ना. यौन आनन्द प्राप्त गर्नका निम्ति गरिने शरीर र अङ्गहरूको सम्पर्क

- **सम्बन्ध** sexual relation ना. यौन सम्पर्क गर्ने आधारमा बनेका सम्बन्ध

- **सहमती** sexual consent ना. शारीरिक, मौखिक, यान्त्रिक वा जुनसुकै प्रवृत्तिको वा माध्यमबाट कुनै प्रकारको यौन कृयाकलाप गर्नका निम्ति प्राप्त गर्नुपर्ने सहमती ( सहमती बिनाका कुनै यौन कृयाकलाप वा यौन आशयका शारीरिक, मौखिक वा यान्त्रिक कृयाहरू हिंसा हो )

- **साथी** sexual partner ना. यौन सम्बन्ध बनाउनका निम्ति रहेको साथी

- **स्पर्श** sexual touch ना. यौन आशयले यौन उत्तेजना जगाउनका निम्ति गरिने शारीरिक स्पर्श

- **स्वप्न** fantasy ना. मानिसको काल्पनिक शक्ति र स्मरणशक्तिबाट सृजित मानसिक चित्रण वा सोचविचारको अनुक्रम जसले मानिसको यौनिकता वा यौन भावनालाई उत्तेजित गर्दछ, जुन कुनै बाहिरी कामोत्तेजक विशेषताका कथा, चलचित्र वा कसैप्रतिको यौन आकर्षणले निम्त्याउन सक्छ

- **हिंसा** sexual violence ना. कसैको मञ्जुरी बिना हिंसा र जबरजस्तीको माध्यमले प्राप्त गर्न खोज्ने यौन कार्य

- **हैरानी** sexual harassment ना. यौन आशयले कसैलाई हैरान गर्नु वा दिक्कदारी दिने काम

- **सन्तुष्टी** sexual satisfaction ना. यौन कृयाकलाप गरेर प्राप्त गरिने सन्तुष्टी

**यौन अङ्ग** हे. यौनाङ्ग

**यौन अभिमुखिकरण** sexual orientation ना. आफो कुन लैङ्गिकता तर्फ यौनिक वा प्रणयात्मक रूपले आकर्षित छ भन्ने विषयमा नीजको यौनिक पहिचान ; (आफू एक पुरुष र अर्को पुरुष तर्फ यौन आकर्षण भएको आधारमा रहेको पहिचान, आफू एक गैर-द्वयसांखिक व्यक्ति र अर्को पारलिङ्गी महिला तर्फ आकर्षित भएको आधारमा रहेको पहिचान, इत्यादी )

**यौन प्राथ्यात्मक अभिरूची** sexual preferences ना. यौनिक वा प्रणयात्मक रूपमा आकर्षित महसुस हुन कुनै व्यक्तिप्रति रहेको केही मापदण्ड ; ( आफ्नो दृष्टिकोणमा शारीरिक रूपमा आकर्षित व्यक्ति देखेपछी आकर्षण अनुभव गर्ने हुन सक्छ ; कुनै व्यक्तिसँग भावनात्मक सम्बन्ध प्रगाढ भएपछी मात्र यौन वा प्रणयात्मक आकर्षण महसुस गर्ने, त्यस अघि नगर्ने हुन सक्छ ; कुनै

व्यक्तिको बौद्धिक क्षमता आफूलाई मनपरेमा मात्र यौन वा प्रणयात्मक आकर्षण महसुस गर्ने पनि हुन सक्छ )

**यौनकर्मी** sex worker ना. यौन व्यवसाय गर्ने व्यक्ति

**यौनाङ्ग** sexual organs ना. यौन सम्पर्क वा यौन सन्तुष्टि प्राप्त गर्न र यौन उत्तेजनाका निम्ति बनिएको मुख्य बाह्य अङ्ग र प्रजनन प्रणालीको बाह्य अङ्ग जसबाट मूत्र निश्कासन पनि हुन्छ

**यौनाङ्ग कर्तन** genital mutilation ना. यौनाङ्गका केही वा सबै भागहरूलाई काट्ने वा निकालेर फाल्ने रीति जसले उक्त यौनाङ्गको स्वस्थ्य कार्य पद्दतिमा ह्रास ल्याउँछ

**यौनाङ्ग परिवर्तन प्रकृया** Sex Re-assignment Process ना. पुलिङ्गी देखि स्त्रीलिङ्गी वा स्त्रीलिङ्गी देखि पुलिङ्गी परिवर्तनका निम्ति गरिने सम्पूर्ण प्रकृया

**यौनाङ्ग परिवर्तन शल्यक्रिया** Sex organs reconstruction surgery ना. यौनाङ्ग परिवर्तन गर्न गरिने शल्यक्रिया ; शिश्नलाई योनी बनाउने वा योनीलाई शिश्न बनाउने

**यौनाङ्गको रौँ** pubic hair ना. हे. ख्वासा

**यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक** Gender and sexual minorities ना. जैविक लिङ्ग, लैङ्गिक पहिचान र/वा यौन अभिमुखिकरणको आधारमा अल्पसङ्ख्यक र सिमान्कृत समूहहरूको छाता शब्द ; अन्तर्लिङ्गी विविधताका व्यक्तिहरू ; गैर-त्याचलिङ्गी लैङ्गिक पहिचानहरू र गैर-विषमयौनिक यौन अभिमुखिकरणहरूलाई जनाउन प्रयोग गरिने छाता शब्द

**यौनिकता** sexuality ना. मानिसले आफूमा गर्ने यौन र कामुक अनुभव र अभिव्यक्तिको व्यापकता ; ( हामीले लगाउने लुगा, हिँडाइ बोलाइमा गर्ने अभिव्यक्ति देखि हामीलाई खाटमा हुँदा के मन पर्छ भन्ने विषय सम्मको व्यापकतालाई यौनिकताले समेट्छ : यदि म सामान्यतः बाटोमा हिँड्दै गर्छु, तर मैले मनपराएको अर्को मान्छे बाटोमा देख्न बित्तिकै म आफ्नो हिँडाइ परिवर्तन गर्छु, त्यो परिवर्तनको भावना उत्थान भयो, त्यो मेरो यौनिकताको एउटा पाटो हो ; यस्ता अभिव्यक्तिका अनुभव देखि कस्तो प्रकारको यौन सम्पर्क मन पर्छ, कुन आशनमा गर्दा आफूलाई बढी आनन्द प्राप्त हुन्छ, यस्ता सबै विषयवस्तु यौनिकता अन्तर्गत पर्दछ )

**यौनोत्सव** orgy [ यौन + उत्सव ] ना. त्यस्तो भेला जसमा सहभागीहरू सबै खुल्ला असीमित र समुहिक रूपमा यौन सम्पर्क राख्छन्

# र

**रक्तविराम** / रक्तबिराम् / menopause [ रक्त + विराम ] ना. कुनै व्यक्तिले आफ्नो जीवनमा अनुभव गर्ने अन्तिम महिनावारी चक्र, जुन औसतमा ४९ वर्ष देखि ६० वर्षको उमेरमा हुने गर्दछ ; महिनावारी सँधैका निम्ति रोकिने अवस्था

**रक्तादि** menarche [ रक्त + आदि ] ना. कुनै व्यक्तिले आफ्नो जीवनमा अनुभव गर्ने पहिलो महिनावारी चक्र, जुन औसतमा ९ वर्ष देखि १३ वर्षको उमेरमा हुने गर्दछ

**रात्रि मनोरञ्जनगृह** night club ना. रातीको समयमा संचालन हुने मनोरञ्जन गर्ने स्थान

**रात्रिकालीन उत्सर्जन** nocturnal emission, wet dream ना. कुनै व्यक्ति सुतेको बेला निन्द्रामा स्वतःस्फूर्त हुने चरम आनन्द जसमा शिश्न भएका व्यक्तिहरूको वीर्य स्खलन र योनी भएका व्यक्तिहरूको योनीरश स्खलन हुने गर्दछ

# ल

**लथालिङ्गी** genderblender / genderflexibe ना. लैङ्गिकताका कुनै परम्परागत मूल्य मान्यतालाई पालना नगर्ने, नमान्ने र अवहेलना गर्ने व्यक्ति ; लैङ्गिकताको सामाजिक मान्यतालाई भङ्ग गर्न सामाजिक अभियानका व्यक्तिहरू जसले रूढीवर्गिकरण वा समाजले फलाना लैङ्गिकताका निम्ति भनेर कोरिदिएको सीमाहरूलाई तोड्ने व्यक्ति

**लाञ्छना** stigma ना. कसैलाई कुनै विशेषताको आधारमा कलंकित तुल्याउनु

**लाडो** (क.बो.) शिश्न

**लिङ्ग** sex ना. मानिसको यौन अङ्ग वा प्रजनन अङ्गबाट छुट्टिने आधार : पुलिङ्गी, स्त्रीलिङ्गी वा अन्तर्लिङ्गी विविधता

**लिङ्यारोटी** genderbread [ लिङ्ग + रोटी ] ना. सन् २०१३ ताका साम किल्लरम्यान नामक एक लेखक तथा चित्रकारले पश्चिमेली देशहरूमा पाइने खानेकुरा 'जिन्जर ब्रेड'को आकारमा यौनिकता, लैङ्गिकता, जैविक लिङ्ग, र यस विविधता बारे बुझाउनका निम्ति बनाएको एक रेखाचित्र, जुन समाजिक संजाल र लैङ्गिकता सम्बन्धीको सामाजिक अभियानहरूमा व्यापक प्रयोग गरिन्छ

**ली** (आ. दुमी) शिश्न

**लीक्पा** (आ. स्युबा) शिश्न

**लीना** (आ. दुमी) यौन सम्पर्क गर्नु

**लैङ्गिक** वि. लैङ्गिकतासँग सम्बन्धित

- **असमानता** gender inequality ना. स्रोत साधन, अवसर, सहभागिता र शक्तिको बाँडफाँड लगायत सबै क्षेत्रहरूमा लैङ्गिकताका आधारमा विभेद हुनु
- **क्वयेर** genderqueer ना. ती व्यक्तिहरू जो आफूलाई परम्परागत लैङ्गिकताको अन्तर वा भेदसँग सन्दिबद्धता जनाउँदैन
- **तटस्थ** gender neutral वि. कुनै पनि एउटा लैङ्गिकतालाई नतोकेको र सबै लैङ्गिकतालाई एकमुष्ठ जनाउने
- **पहिचान** identity ना. मानिसको लैङ्गिकता सम्बन्धि व्यक्तिगत अनुभूती र त्यसलाई व्याख्या गर्न नीजले प्रयोग गर्ने शब्दवाली
- **प्रस्तुतीकरण** expression ना. आफ्नो लैङ्गिकतासँग सम्बन्धित, व्यक्तिको व्यवहार, आचरण, हाउभाउ वा अभिव्यक्ति
- **भूमिका** gender roles ना. समाजको रूढीवादी र प्रतिबन्धात्मक धारणा जसमा कुनै

लैङ्गिकताका व्यक्तिहरूलाई सीमित दायरा भित्र निश्चित प्रकारका भूमीका निर्धारण गरिदिएको हुन्छ

- **मिथ्यावर्गिकरण** gender stereotype ना. कुनै लैङ्गिकता प्रति अतिसरलीकरण गरिएका ती व्यापक पूर्वाग्रही निषेधात्मक धारणाहरू

- **मूल्य मान्यता** gender norms ना. लैङ्गिकता सम्बन्धी समाजले निर्धारण गरिदिएका प्रतिबन्धात्मक मूल्य मान्यता

- **वरिक्तता** gender dysphoria ना. आफ्नो जैविक लिङ्ग र लैङ्गिक पहिचान नमिल्दा वा मेल नखाँदा कतिपय व्यक्तिहरूले अनुभव गर्ने तनाव

- **विभेद** gender discrimination ना. लैङ्गिकताका आधारमा गरिने विभेद

- **समानता** gender equality ना. स्रोत साधन, अवसर, सहभागिता र शक्तिको बाँडफाँड लगायत सबै क्षेत्रहरूमा लैङ्गिकताका आधारमा समानता हुनु वा कुनै विभेद नहुनु

- **समुदाय** gender communities ना. विश्वका विभिन्न देशहरूमा मूलधारको समाजमा लैङ्गिकताका कारण अपहेलना, विभेद र त्यस समाजमा बसी नसक्नु अवस्था आएको हुनाले एकासमयमा समानुभव भएका मानिसहरू मूलधारको समाजबाट छुट्टै समाज बनाएर बस्न गएका थिए, जान्छन् वा जानेछन् , र त्यस्ता समाजको पनि आफ्नै छुट्टै रीतिरीवाज र मूल्य मान्यता हुन सक्छ ; ( भारतमा विशेष गरी तेस्रोलिङ्गी लैङ्गिक पहिचान भएका व्यक्तिहरू समाजबाट अपहेलित भएको हुनाले आफ्नै छुट्टै लैङ्गिक समुदायहरू बनाए जस्तै हिजडा, पैवया, खुसरा, इत्यादी, यी समाजहरूको आ-आफ्नै छुट्टा छुट्टै नियम र रीतिथिति छन् र जस्तै हिजडा समुदायको मानिसले आफूलाई अन्य नाम पैवया, खुसरा भनेर भन्दैनन् वा पैवयाले आफूलाई हिजडा, खुसरा भन्दैनन् ; पुरुषहरूले अत्यन्तै अत्याचार गरेको हुनाले केन्याका महिलाहरूले उमोजा भन्ने छुट्टै गाउँ नै बनाए जुन महिलाहरूका निम्ति मात्र हो

**लैङ्गिकता** gender ना. पुरुषत्व र नारीत्व सम्बन्धिका फरक जनाउने मनोसामाजिक विशेषता

# व

**वक्तयोनी मैथुन** cunnilingus [ वक्त + योनी ] ना. एक प्रकारको मुख मैथुन जुन योनीमा गरिने गरिन्छ जसमा एक व्यक्तिले अर्को व्यक्तिको योनी मुखले चुस्ने, जिब्रोले खेलाउने वा मुखको प्रयोगबाट यौन क्रियाकलाप गरिन्छ

**वक्तलुब्धक मैथुन** anilingus [ वक्त + लुब्धक ] ना. एक प्रकारको मुख मैथुन जुन गुदद्वारमा गरिने गरिन्छ जसमा एक व्यक्तिले अर्को व्यक्तिको गुदद्वार मुखले चुस्ने, जिब्रोले खेलाउने वा मुखको प्रयोगबाट यौन क्रियाकलाप गरिन्छ

**वक्षबन्धन** / बक्छयबन्धन् / binding [ वक्ष + बन्धन ] (तद.) ना. आफ्नो स्तनको आकार ठूलो कपडा बाहिरबाट नदेखाउनका निम्ति अपनाइने विधि ; स्तनलाई लुकाउने हेतुले अपनाइने विधि ( उदा. विशेष गरी पारलिङ्गी पुरुष र सदेप विषुपहिरणीहरूले विभिन्न विधिहरूबाट आफ्नो स्तनको आकार पोशाक बाहिरबाट नदेखियोस् वा आफ्नो स्तन ठूलो नदेखियोस् भनेर वक्षबन्धन गर्ने गर्दछन् )

**वस्तुकरण** / बस्तुकरन् / objectification ना. कुनै पनि व्यक्तिलाई एउटा नीर्जीव वस्तु सरी तुल्याइने, ठानिने वा गरिने व्यवहार

**- महिलाको वस्तुकरण** objectification of women ना. पितृसत्तमक सामाजिक व्यवस्थामा महिलाहरूलाई श्रमिक, भावनात्मक, मनोवैज्ञानिक र यौनिक रूपले पुरुषको उपभोग गर्ने वस्तु सरी तुल्याउनु, ठान्नु वा व्यवहार गर्नु

**विदुतीय कामोत्तेजना** erotic electrostimulation ना. विदुतीय उपकरणहरू प्रयोग गरी यौन उत्तेजनाका निम्ति नशाहरूमा राखी उत्पादन गरिने उत्तेजना

**विभेद** discrimination ना. जात, धर्म, लिङ्ग, वर्ण, इत्यादी विभिन्न सामाजिक पृष्ठभूमीका आधारमा मानिस वा समूह प्रति गरिने अन्यायपूर्ण वा पूर्वाग्रही व्यवहार ; सामाजिक मूल्य मान्यता वा राज्य व्यवस्थाको चरित्रका कारण कुनै एक निश्चित व्यक्ति वा समूहले जात, धर्म, लिङ्ग, वर्ण, इत्यादी विभिन्न सामाजिक पृष्ठभूमीका आधारमा पदानुक्रमिक नीच्य स्थिति वा शक्तिको बाँडफाँडमा न्यून र असमान रहनु पर्ने अवस्था

**विवस्त्रनृय** strip tease ना. एक प्रकारको कामुक नृत्य जसमा नर्तकले बिस्तारी वा चरणबद्ध रूपमा मोहक र यौन इशारा दिने ढङ्गले आफ्नो लुगा पूरै वा अधिकांश खोल्न थाल्छ र अन्त्यमा नग्न हुन्छ

**विशेषाधिकार** / बिसेसाधिकार् / privilege ना. कुनै एक विशेष व्यक्ति वा समूह भएकै आधारमा सामाजिक मूल्य मान्यता वा राज्य व्यवस्था तथा चरित्रका कारण स्वतः पाइने अधिकार, लाभ, प्रतिरक्षा वा उच्च पदानुक्रमिक शक्ति

**विषमप्रणयात्मक अयौनिक** heteroromantic asexual ना. विपरीत लैङ्गिकता भएका व्यक्तिहरू प्रति प्रणयात्मक भावना हुने अयौनिक व्यक्तिहरू

**विषमयौनात्मक प्रणय** heteroromantic [ विषम + यौन + आत् + मक ] वि. विपरीत लैङ्गिकता तर्फ महसुस हुने प्रणयात्मक भावना

**विषमयौनिक** / बिसम्-यौनिक् / heterosexual / straight (तत्स.) [ विषम् + यौन + इक ] वि. विपरीत लैङ्गिकता तर्फ आकर्षित व्यक्ति

**- आदर्शीकरण** heteronormality ना. विषमयौनिक व्यक्तिहरू वा विषमयौनिक सम्बन्धहरू मात्र 'सामान्य' हुन् र यस बाहेकका यौन अभिमुखिकरणहरूलाई असामान्य मानेर अपहेलना तथा विभेद गर्ने संकुचित मान्यता

**- आदर्शवादी** heteronormative वि. विषमयौनिक व्यक्तिहरू वा विषमयौनिक सम्बन्धहरू मात्र 'सामान्य' हुन् र यस बाहेकका यौन अभिमुखिकरणहरूलाई असामान्य मानेर अपहेलना तथा विभेद गर्ने संकुचित मान्यता भएका व्यक्तिहरू

**विषमयौनिक त्याचलिङ्गी पुरुष राज्य** heterocisandrocracy ना. सरकार वा राज्य जसमा शासक वा राज्यमा उच्च पदका सबैजना विषमयौनिम त्याचलिङ्गी पुरुष हुन्छन्, र यस बाहेक अरु कोही भएपनि असमानमित संख्या निर्णायक भूमीकामा प्रभाव पार्न नसक्ने वा राख्नका निम्ति मात्र राखिएको

**विषमयौनिक विवाह** heterosexual marriage ना. विपरीत लैङ्गिकताका दुई व्यक्तिबीच हुने विवाह

**विषमयौनिकता** heterosexuality (तत्स.) [ विषम् + यौन + इक + ता ] ना. विपरीत लैङ्गिकता प्रति आकार्षण हुनु

**विषालु पुरुषत्व** हे. वैषिक पुरुषत्व

**विषुपहिरणी** crossdresser / transvestites वि. ती व्यक्तिहरू जो आफ्नो लैङ्गिकता भन्दा विपरीत लैङ्गिकताले लगाउने वस्त्र र पहिनाईमा प्रस्तुत हुन्छन्, विषुलिङ्गी र पारलिङ्गी जस्तै आफूलाई आफ्नो विपरीतको लिङ्ग भन्ने अनुभव गर्दैनन् तर आफू विपरीत लैङ्गिकता भएका व्यक्तिहरूले लगाउने भनिएको पोशाक र पहिरन लगाउन रुचाउँछन् र उनीहरूको लैङ्गिकता आफ्नो इच्छाको वस्त्रले अभिव्यक्ति हुने गर्दछ

**विषुलिङ्गी** transsexual [ विषु + लिङ्ग + ई ] वि. कुनै व्यक्ति जसले आफूलाई विपरीत लिङ्गको अनुभव गर्छ र आफू गलत लिङ्गको शरीरमा जन्मेको अनुभव गरी यौनाङ्ग परिवर्तनको तीव्र चाहना राख्दछ ; ( विषुलिङ्गीलाई पारलिङ्गीको छाता अन्तर्गत पनि राखिने गरिन्छ, तर पारलिङ्गी हुनु जैविक लिङ्ग र लैङ्गिक पहिचानको बेमेल भएपनि सबै पारलिङ्गीहरू आफ्नो यौनाङ्ग वा जैविक लिङ्गसँग असहज महसुस नगर्न सक्छ वा यौनाङ्ग परिवर्तन प्रकृयामा पूर्ण वा आंशिक रूपमा जान नचाहन सक्छ । विषुलिङ्गीमा भने आफू गलत शरीरमा जन्मेको तीव्र भान हुन्छ र लैङ्गिक वरिक्तताको अनुभव हुन्छ । )

- **महिला** transsexual female ना. कुनै व्यक्ति जो पुलिङ्गी शरीरमा जन्मेका छन् र आफूलाई गलत शरीरमा जन्मेको स्त्रीलिङ्गी अनुभव गर्दछन् एवं आफ्नो यौनाङ्ग परिवर्तन गरी स्त्रीलिङ्गी हुने तीव्र चाहना राख्दछन्

- **पुरुष** transsexual male ना. कुनै व्यक्ति जो स्त्रीलिङ्गी शरीरमा जन्मेका छन् र आफूलाई गलत शरीरमा जन्मेको पुलिङ्गी अनुभव गर्दछन् एवं आफ्नो यौनाङ्ग परिवर्तन गरी पुलिङ्गी हुने तीव्र चाहना राख्दछन्

**वीर्य** semen ना. पुलिङ्गी ( वा कतिपय अन्तर्लिङ्गी ) मानिसहरूको गोनाड ( यौन ग्रन्थी ) बाट उत्पादन हुने चिप्लो अलिकति बाक्लो तरल पदार्थ हो जसमा शुक्रकीट कोषाणुहरू हुन्छ

**वीर्य स्खलन** ejaculation ना. यौन आनन्द र चरम आनन्द प्राप्त गरेपछी यौन ग्रन्थी गोनाड र नलीद्वारा शिश्नबाट वीर्य उच्च चापमा बाहिरिनु

**वृत्तनिर्धु** / ब्रित्तनिर्धु / circle jerk [ वृत्त - circle + निर्धुनिति - shake off ] ना. एक प्रकारको यौन अभ्यास जसमा पुरुषहरू गोलो घेरा गरेर बस्छन् र एकैछोटी हस्तमैथुन गरी वीर्य स्खलन गर्छन्

**वृत्तलेह** / ब्रित्तलेह / daisy chain [ वृत्त - circle + लेहनं - lick ] ना. एक प्रकारको यौन अभ्यास जसमा महिलाहरू गोलो घेरा गरेर बस्छन् र एक अर्काको योनी पालैपिलो चाट्ने गर्छन्

**वृन्देकज** / ब्रिन्देकज् / gangbang [ वृन्द - gang + एकज - single ] ना. एक प्रकारको यौन अभ्यास जसमा एक भन्दा बढी व्यक्तिहरूले

एकजना व्यक्तिलाई एकैचोटी वा पालैपिलो यौन सम्पर्क गर्ने गर्छन्

**वैवाहिक बलात्कार** marital rape ना. आफ्नो दम्पत्तीद्वारा हुने बलाद्कार वा जबरजस्ती करणी

**वैवाहिक समानता** marriage equality ना. (क्वयेर आन्दोलनको सवालमा) लिङ्ग निर्बाधात्मक विवाह ; कुनै पनि दुई वयस्क व्यक्तिहरू विवाह गर्न चाहेमा लैङ्गिकताको बाधा हुन नहुने ; त्याचलिङ्गी पुरुष र त्याचलिङ्गी महिला बीचको विवाह जस्तै अरु जुनसुकै लैङ्गिकता भएको व्यक्तिले जुनसुकै लैङ्गिकता भएको व्यक्तिसँग विवाह गर्न पाउने व्यवस्था

**वैषिक पुरुषत्व** / वैसिक् / toxic masculinity [ विष + इक ] ना. त्यस्ता सामाजिक र सांस्कृतिक मूल्य मान्यता जसलाई पुरुष हुनुको गुण वा पुरुषहरूको प्राकृतिक गुण भनेर पुरुषहरूलाई सामाजिकरणको प्रकृयामा सिकाइन्छ जुन प्राधित व्यवहार मात्र हो र समाज तथा पुरुषहरू आफैलाई हानि पुर्याउँछ ; ( पुरुषहरू बारे सामाजिक रूढीवर्गिकरण परिभाषामा हिंस्रक हुनुपर्छ भन्ने सिकाइन्छ र पुरुषको आवेग वा हिंस्रक व्यवहार देखाएमा त्यसलाई पुरुषत्व झल्केको हो, वा पुरुषहरू यस्तै हो भनी सामान्यकरण गर्ने र स्याबासी तथा प्रोत्सहान गर्ने गरिन्छ जुन पुरुषहरू त्यसै मूल्य मान्यतामा हुर्कन्छ र त्यस्तै स्वभाव हुन्छ ; जब कि हिंस्रक व्यवहार जुनसुकै लैङ्गिकताका व्यक्तिहरूले देखाउन सक्छ तर खासमा यस्ता व्यवहारहरूले समाजमा हानि पुर्याउने भएकाले जुन सुकै लैङ्गिकताका मानिसलाई गर्न प्रोत्साहन दिनुहुँदैन )

**व्याकरणात्मक लिङ्ग** grammatical gender ना. कुनै पनि भाषाका नाम शब्दको श्रेणी जसको भाषाका अरु पदवर्ग ( विशेषण, क्रियापद, सर्वनाम) सँग व्याकरणात्मक सम्झौता प्रणाली हुन्छ ; संसारको ०.२५ % भाषाहरूमा यस्ता नियमहरू हुन्छ जसमा शब्दको पनि आफ्नै लिङ्ग हुन्छ । यो व्याकरणात्मक लिङ्गको सम्बन्ध प्राकृतिक लिङ्गसँग नहुन सक्छ, अर्थात् कतिपय भाषामा नीर्जीव वस्तुहरूको पनि लिङ्ग हुन्छ , कतिपय भाषाहरूमा महिला मानवलाई सम्बोधन गर्नका निम्ति मात्र छुट्टै लिङ्ग हुन्छ र त्यस बाहेक अरु सबैलाई एउटै लिङ्गले सम्बोधन गरिन्छ, इत्यादी ; कतिपय भाषामा नामको मात्र लिङ्ग हुन्छ भने कतिपय भाषाहरूमा सबै पदवर्गको )

# श

**शब्दकोष अभियान** dictivism ना. शब्दकोषहरूमा विभिन्न समुदाय, समूह र वर्ग तथा त्यसका अधिकार क्षेत्रको कामले निर्माण गरेको शब्दभण्डारलाई मूलधारको शब्दकोषमा समावेश गराउन गरिने अभियान

**शरीरावस्थाका आधारमा लज्जित पार्नु** body shaming क्रि. कुनै व्यक्तिलाई उसको शरीरको अवस्था, आकृति वा गुणको आधारमा लज्जित महसुस गराउनु, अधिकांश अवस्थामा गोर्र्याइँ, विभेद, लाञ्छना, दुर्व्यवहार सहित

**शल्यक्रिया अनारम्भित** non-operative वि.
- **पारलिङ्गी महिला** transgender woman ना. पारलिङ्गी महिला जो कुनै प्रकारको यौन परिवर्तन प्रकृया आरम्भ गरेको छैन
- **पारलिङ्गी पुरुष** transgender man ना. पारलिङ्गी पुरुष जो कुनै प्रकारको यौन परिवर्तन प्रकृया आरम्भ गरेको छैन

**शल्यक्रिया पूर्णावस्थित** post-operative वि.
- **पारलिङ्गी महिला** transgender woman ना. पारलिङ्गी महिला जसले यौन परिवर्तन प्रकृया सबै पूरा गरी यौनाङ्ग परिवर्तन शल्यक्रियाद्वारा शिश्नलाई योनीमा परिवर्तन गरेका छन्
- **पारलिङ्गी पुरुष** transgender man ना. पारलिङ्गी पुरुष जसले यौन परिवर्तन प्रकृया सबै पूरा गरी यौनाङ्ग परिवर्तन शल्यक्रियाद्वारा योनीलाई शिश्नमा परिवर्तन गरेका छन्

**शल्यक्रिया पूर्वावस्थित** pre-operative वि.
- **पारलिङ्गी महिला** transgender woman ना. पारलिङ्गी महिला जसले पुदेस यौन परिवर्तन प्रकृया अपनाएर सोही प्रकारको शारीरिक गुण प्राप्त गरेका छन् तर यौनाङ्ग भने परिवर्तन गरेका छैनन् , जस्तै अनुहारमा आउने दाह्रि जुँगा नआउने प्रकृया अपनाएको, छाला र मांशापेशी नरम हुने प्रकृया अपनाएको र स्तन बढाउने प्रत्यारोपण वा कुनै अरु प्रकृया गरिभ्याएको तर आफ्नो यौनाङ्ग शिश्न नै रहेको
- **पारलिङ्गी पुरुष** transgender man ना. पारलिङ्गी पुरुष जसले सदेप यौन परिवर्तन प्रकृया अपनाएर सोही प्रकारको शारीरिक गुण प्राप्त गरेका छन् तर यौनाङ्ग भने परिवर्तन गरेका छैनन् , जस्तै अनुहारमा आउने दाह्रि जुँगा पलाउने प्रकृया अपनाएको, छाला र मांशापेशी खस्रो हुने प्रकृया अपनाएको र स्तन हटाउने शल्यक्रिया गरिभ्याएको तर आफ्नो यौनाङ्ग योनी नै रहेको

**शहर्याउनिक पुरुष** meterosexual man [ शहर + यौनिक ] ना. शहरी क्षेत्रमा बसोबास गर्ने ती पुरुष जो आफ्नो प्रकटन, आफू कस्तो देखिएको छ, र आफ्नो सौन्दर्यका विषयमा विशेष ध्यान पुर्याउने र खयाल राख्ने, र अक्सर यसका लागि धेरै समय र पैसा खर्च गर्ने

**शात्रव लिङ्गेभेद** / सात्रब् लिङ्गभेद् / hostile sexism ना. त्यस्ता घृणा निर्देशित व्यवहार जुन पूर्व रूपमा नकरात्मक दृष्टिकोण जुन लैङ्गिकताप्रति विभेदमा आधारित छ

**शारीरिक निष्ठा** bodily integrity ना. मानव शरीरको अनुलङ्घनियता (उल्लङ्घन गर्न नहुने) अथवा व्यक्तिको आफ्नो शरीरमाथीको स्वामित्व, स्वायत्तता र आत्मनिर्णय

**शारीरिक सकरात्मकता** body positivity ना. समाज वा सौन्दर्य उद्योगहरूले 'राम्रो शरीर' वा 'सुन्दर शरीर' एवं 'नराम्रो शरीर' वा 'कुरूप शरीर' भनेर परिभाषित गरिएका संकीर्ण विचारधारालाई तोडेर मानव शरीरको विविधता र शरीरको आकृतिलाई स्वीकार्ने मान्यता बोकेको दार्शनिक अवधारणा वा सामाजिक अभियान ; शरीरको आकृतिका कारण मानिसले स्वःलाञ्छना लगाउने, आफूले आफैलाई नराम्रो ठान्ने वा अरुलाई नराम्रो भनी औँल्याएर गोर्र्याइँ गर्ने व्यापक समस्यालाई उन्मुलन गर्दै मानव शरीरको विविधतालाई स्वीकार्दै सौन्दर्य उद्योगले स्थापित

गर्न खोजेको संकुचित परिभाषाहरूलाई तोड्दै स्वीकार्यताको मूल्य

**शारीरिक स्वायत्तता** bodily autonomy ना. आफ्नो शरीरमाथी अरुको हस्तक्षप बिना व्यक्तिको आफ्नो आत्मनिर्णय

**शारीरिकाङ्कन** हे. देहाकृति

**शिश्न** penis (तद. ) पुलिङ्गी प्रजनन अङ्ग प्रणालीको बाह्य अङ्ग जुन लाम्चो आकारको हुन्छ, जसबाट यौन सम्पर्कका बेला शुक्रकीट निश्कासन गर्ने र पुलिङ्गी व्यक्तिहरूमा पिशाब निश्कासन हुने अङ्ग हो

**शिश्नको टाउको** glans penis ना. शिश्नको टुप्पोमा स्थित संवेदनशील भाग

**शिश्नचर्म** foreskin शिश्नको खोल जस्तै रहेको छाला जसले शिश्नलाई छोप्छ र त्यस छालालाई शिश्नको टुप्पो देख्ने गरि पछाडी तान्ने र छोप्ने गर्न मिल्छ

**शुक्रकीट** sperms ना. पुलिङ्गी प्रजनन कोषाणु जुन चेपागाँडा आकारको हुन्छ र त्यसको उत्पादन अण्डकोषमा हुन्छ

- **संचय** sperm banking ना. कुनै व्यक्तिको शुक्रकीटलाई शरीरबाट निकालेर प्राविधिक संयन्त्रहरूद्वारा कृत्रिम वातावरणमा संचय गर्ने

**शुक्राणु** हे. शुक्रकीट

**श्राबपीडा** dysmenorrhea / cramps ना. महिनावारी हुँदा नाइटो तलको हड्डी ढाँचा र तल्लो पेट दुख्नुका साथै अरु लक्षण ( जस्तै ढाड दुख्ने, वाकवाकी लाग्ने, झाडा लाग्ने, इत्यादी ), जुन सामान्यतः एक देखि ३ दिन सम्म हुन सक्छ

**श्वनरीति यौन** doggy position sex [ श्वन् + रीति ] ना. यौन सम्पर्कका क्रममा एक जना व्यक्ति घोप्टो परेर निहुरिने र अर्को व्यक्ति उठेर वा घुँडामा टेकेर प्रवेश गराउने

# स

**सचेत प्रतारक महिलाविरोधी** woke misogynist वि. आफूलाई महिलावादी वा लैङ्गिक समानताको वकालत गर्ने व्यक्तिको रूपमा चिनाउने वा लैङ्गिक समानताको आदर्शपात्रका रूपमा प्रस्तुत हुने तर वास्तवमा विभिन्न रूपले महिलाविरोधी धारणा र पितृसत्तात्मक अभ्यास जारी राख्ने व्यक्ति

**सदेप** FTM (सां) स्त्रीलिङ्गी देखि पुलिङ्गी

**सपाङ्गवाद** ableism ना. अपाङ्गता भएका व्यक्तिहरू प्रति असमावेशी, विभेदकारी र पूर्वाग्रही मान्यता भएको दमनकारी व्यवस्था

**सममप्रणयात्मक अयौनिक** homoromantic asexual ना. समान लैङ्गिकता भएका व्यक्तिहरू प्रति प्रणयात्मक भावना हुने अयौनिक व्यक्तिहरू

**समयपूर्व वीर्य स्खलन** premature ejaculation ना. यौन उत्तेजना हुन बित्तिकै वा यौन सम्पर्क सुरु गर्न बित्तिकै हुने वीर्य स्खलन ; चरमानन्द प्राप्त हुनु अघि नै भइदिने वीर्य स्खलन

**समयौनात्मक प्रणय** homoromantic [ सम + यौन + आत् + मक ] वि. उस्तै / समान लैङ्गिकता तर्फ महसुस हुने प्रणयात्मक भावना

**समयौनिक** / समयौनिक् / homosexual (तत्स.) [ सम + यौन + इक ] वि. उस्तै / समान लैङ्गिकता तर्फ आकर्षित व्यक्ति

- **व्यक्ति प्रति घृणा** homophobia ना.
- **महिला विरोधी** homomisogyny

ना. समयौनिक महिला प्रति विभेदकारी मानिसिकता भएको ; समयौनिक भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

- **पुरुष** Gay man
- **महिला** Lesbian woman

**समयौनिक अभिभावक** homosexual parent ना. समयौनिक व्यक्ति(हरू) जसले विभिन्न विज्ञानिक प्रविधिबाट जन्माए वा धर्म सन्तान राखे

**समयौनिक जोडी** homosexual couple ना. समयौनिक व्यक्तिहरूको जोडी

**समयौनिक पुरुष जोडी** gay couple ना. समयौनिक पुरुषहरूको जोडी ; दुई समयौनिक पुरुष प्रेमी

**समयौनिक महिला जोडी** lesbian couple ना. समयौनिक महिलाहरूको जोडी ; दुई समयौनिक पुरुष प्रेमी

**समयौनिक विवाह** homosexual marriage ना. समान वा उस्तै लैङ्गिकताका दुई व्यक्तिबीच हुने विवाह

**समयौनिकता** homosexuality (तत्स.) [ सम + यौन + इक + ता ] ना. उस्तै / समान लैङ्गिकता प्रति आकार्षण हुनु

**समर्थक** ally ना. हे. दौंतरी

**समलिङ्ग** same-gender ना. एउटै लिङ्गका एक भन्दा बढी व्यक्तिहरू ; उस्तै लिङ्ग भएका व्यक्तिहरू

**समलिङ्गी जोडी** same gender couples ना. एउटै लैङ्गिकताका दुई व्यक्तिहरूको जोडी

**समलिङ्गी विवाह** same gender marriage ना. समान वा उस्तै लैङ्गिकताका बीच हुने विवाह

**समानता** equality ना. अवसर, जिम्मेवारी,अधिकार, सेवा, लाभ,स्रोत-साधन आदिमा सबैको समान अवसर, पहुँच र नियन्त्रण कायम भएको स्थिति

**समान्यिकरण** normalization ना. कुनै विषयवस्तुलाई सामान्य मान्ने वा सामान्य हो भनेर आत्मसात् गरिने व्यक्तिगत वा सामाजिक प्रकृया

**समावेशिता** inclusion ना. १. कुनै एउटा परिस्थिति वा संयन्त्रमा सबै समूह र वर्गहरूलाई समेटिएको अवस्था ; २. कुनै समूहलाई विभिन्न वा कुनै आधारमा पछाडी पार्ने, मूलप्रवाहमा आउन नदिने, असमान शक्तिको बाँडफाँद हुने परिस्थिति, चरित्र, प्रणाली वा तन्त्रलाई परिवर्तन गर्ने सकरात्मक तथा परिवर्तनकारी पहल र कदमहरू

**सम्पर्क पत्रिका** contact magazine ना. त्यस्ता पत्रपत्रिका जसले स-साना विज्ञापनहरू छाप्छन् जसमा मानिसहरूले यौन सम्पर्कको मौका प्रस्ताव गर्छन्

**सम्भोग** sexual intercourse ना. एक प्रकारको यौन सम्पर्क जसमा यौन आनन्द,

प्रजनन वा दुबैका निम्ति शिश्नलाई योनीमा छिराइन्छ

**सर्वप्रणयात्मक अयौनिक** panromantic asexual ना. सबै प्रकारका लैङ्गिकता भएका व्यक्तिहरू प्रति प्रणयात्मक भावना हुने अयौनिक व्यक्तिहरू

**सर्वयौनात्मक प्रणय** panromantic [ सर्व + यौन + आत् + मक ] वि. सबै वा जुनसुकै लैङ्गिकता तर्फ महसुस हुने प्रणयात्मक भावना

**सर्वयौनिक** / सर्बयौनिक् / pansexual (तत्स.) [ सर्व + यौन + इक ] वि. सबै लैङ्गिकता तर्फ आकर्षित व्यक्ति ; यौन वा प्रणयात्मक आकर्षण महसुस गर्नका निम्ति लैङ्गिकताको बाधा नभएका व्यक्तिहरू

- **व्यक्ति प्रति घृणा** panphobia ना.

- **महिला विरोधी** panmisogyny ना. सर्वयौनिक महिला प्रति विभेदकारी मानिसिकता भएको ; सर्वयौनिक भएको र महिला भएको दुबै कारणहरूले अरुलाई विभेद गर्ने व्यक्ति

**सर्वयौनिकता** pansexuality (तत्स.) [ सर्व + यौन + इक + ता ] ना. सबै लैङ्गिकता प्रति आकार्षण हुनु ; यौन वा प्रणयात्मक आकर्षण महसुस गर्नका निम्ति लैङ्गिकताको बाधा नहुनु

**सहमती फिर्ता लिनु** withdrawal of consent ना. दिएको सहमती फिर्ता लिनु ; कुनै पनि यौन वा घनिष्ठ सम्बन्ध राख्नका निम्ति सहमती दिइसकेपछी उक्त कार्य सुरु गर्नु अघि वा उक्त कार्य भइरहेको बीचमा मन फेर्दा सहमती फिर्ता लिनु

**साटासाटी** swinging ना. यौन साथी साटासाट गरी गरिने यौन सम्पर्कको अभ्यास ; कुनै दुई भन्दा बढी व्यक्तिहरूको संख्यामा यौन साथीहरू आलोपालो गर्दै यौन सम्पर्क गर्ने अभ्यास ; प्रतिबद्ध सम्बन्ध वा वैवाहिक सम्बन्धमा रहेका जोडीहरूले आफ्नो दम्पत्ती वा प्रेमीहरू साटासाट गरी यौन सम्पर्क गर्ने अभ्यास

**साटासाटी पार्टी** swinger party ना. त्यस्तो पार्टी वा बन्दभेला जसमा आफ्नो जोडी वा दम्पत्ती साटेर वा साटासात गरेर यौन सम्पर्क गर्न सकिन्छ

**सामुहिक यौन सम्पर्क** group sex ना. दुई भन्दा बढी व्यक्तिहरूको संलग्नतामा गरिने यौन सम्पर्क

**सुकुम्बन्ध** hobosexual [ सुकुमबासी + सम्बन्ध ] ना. ती व्यक्तिहरू जो आफू सुकुमबासी नहोस् भन्ने हेतुले अरु सँग सम्बन्ध राख्छन् ; ती घरबारविहीन व्यक्तिहरू जो अरुसँग यौन सम्बन्ध वा कुनै मायाको सम्बन्ध केवल आफूले घर बस्न पाओस् भन्ने आशयले राख्छन्

**सुक्ष्मक्रोध** microagression ना. सामान्यतः प्रयोग गरिने संक्षिप्त र दिनाचार्यी मौखिक, व्यवहारात्मक वा वातवरणीय अपमान, चाहे जानीबुझी वा अन्जानमा, जसले कुनै समूह वा वर्गलाई प्रतिरोधी, अपमानजनक वा नकरात्मक पूर्वाग्रही उपेक्षा गर्दछ ( उदा. सिमान्कृत जातीको सांस्कृतिक अभ्यासलाई 'अनौठो' वा 'विचित्र'को उपमा दिने, कुनै गैर-मूलधार समाजको व्यक्तिको परिवेशलाई अमान्य तुल्याउने टिप्पणी, कुनै मान्छेको छाला अधिकांशको भन्दा फरक देखिन

बित्तिकै 'तपाइँ कुन देशबाट आएको' भनेर सोध्ने )

**सुडेनी** midwife ना. प्रसब प्रणाली, र नवजात शिशु स्याहार सम्बन्धी विशेष गरी परम्परागत शीप भएका व्यक्तिहरू जसले विशेषतः प्रसवका क्रममा सघाउने गर्दछ

**सुत्केरी अवस्था** postpartum period ना. बच्चा जन्मन बित्तिकै सामान्यतः ६ हफ्ता सम्म जन्म दिने व्यक्तिको शारीरिक अवस्था

**सुरक्षित यौन सम्पर्क** safe sex ना. यौन संक्रमणबाट जोगाउने साधानहरूको प्रयोग गरी गरिने यौन सम्पर्क

**सूक्ष्म लिङ्गभेद** subtle sexism ना. त्यस्ता लिङ्गभेदी अभ्यास, धारणा वा व्यवहार जसलाई 'सानो कुरा' वा समाजिक स्वीकार्यता भएकाले नगण्य मानिन्छ ; सुक्ष्म रूपमा रहेको लिङ्गभेद ; ( उदा. निश्चित उमेरका महिलाहरूलाई विवाह गर्न ढिलो भएको टिप्पणी दिने, कार्यस्थलमा महिलाहरूलाई असम्बन्धित काम गर्न लगाउने : कार्यक्रम सहयोगीलाई चिया बनाउन लगाउने, महिलाहरूले आफ्नो कुरा राखिरहँदा बीचमा वाकवरोध गरिरहने )

**सेक्स** (आ. अङ्ग्रेजी) यौन

**सेक्स पार्टी** sex party ना. बन्दकोठा वा बन्दसंख्यामा गरिने भेला र पार्टी जसमा यौन सम्पर्क हुने गर्दछ, यौन साथी खोज्ने वातावरण हुन्छ वा समान इच्छा भएकालाई भेट्ने मौका

**सेक्सी** (आ. अङ्ग्रेजी) १. अत्यन्त आकर्षक ; २. अत्यन्त राम्रो ; ३. यौनरूपले आकर्षक

**स्खलन अस्वीकारत्मक उत्तेजना** erotic sexual denial ना. यौन उत्तेजना र सन्तुष्टीको एक अभ्यास जसमा कुनै व्यक्तिलाई यौन उत्तेजनाको चरम बिन्दुमा पुगेपनि वीर्य वा योनीरश स्खलन भई सन्तुष्ट हुन दिनबाट लामो समय सम्म रोकेर अझै उत्तेजित माथी उत्तेजित बनाइराख्ने र लामो समय सम्म स्खलनलाई रोकेपछी बल्ल स्खलन गरी आनन्द प्राप्त गर्ने

**स्तन** / स्तन् / breasts ना. शरीरको मध्य माथिल्लो भागमा घाँटी मुनी र पेट माथी देब्रे तथा दाहिने तर्फे हुने मांशापेशी युक्त अङ्ग

**स्तम्भन** / स्तम्भन् / erection ना. यौन उत्तेजना महसुस गर्दा वा स्वतःस्फूर्त रूपमा शिश्नको आकार ठूलो र कडा हुने प्रकृया

**स्थानान्तरित गर्भधारण** surrogacy ना. कानुनी सम्झौता सहित गरिने एक चिकित्सक विधि जसमा एक व्यक्तिको गर्भ अर्को व्यक्तिले बोकेर बच्चा जन्माइदिन्छ ; एक व्यक्तिको गर्भबाट भ्रुणलाई अर्को व्यक्तिको गर्भमा प्रतिस्थापन गरी नीजले बच्चा जन्माइदिने चिकित्सक विधि

**स्प्रेक्ट्रम** spectrum ना. जुनसुकै विषय जसको विविधता कुनै निश्चित संख्यामा सीमित हुँदैन

**स्वःधारुमैथुन** autofellatio [ स्वः + धारु - sucking + मैथुन ] ना. आफ्नो शिश्नलाई आफ्नै मुखबाट खेलाएर उत्तेजित पार्ने कार्य

**स्वप्नदोष** हे. रात्रिकालीन उत्सर्जन

**स्वासी** (आ. दुमी) अण्डकोष

**स्वास्नी** ना. श्रीमती ; महिला दम्पत्ति

# ह

**ह.ति.या.** HRT (सां.) हर्मोन प्रतिस्थापन प्रकृया

**हग्नु** क्रि. दिसा गर्नु

**हर्नी** horny (आ. अङ्ग्रेजी ) ना. यौन उत्तेजना महसुस गरिरहेको अवस्था ; यौन सम्पर्क गर्ने एकदम चाहना भएको अवस्था

**हर्मोन प्रतिस्थापन थेरापि** Hormone Replacement Therapy ना. आफ्नो लैङ्गिक पहिचानसँग आफ्नो द्वितिय यौन विशेषताहरूलाई मेल खिलाउनका निम्ति विभिन्न औषधीहरूद्वारा एकप्रकारको हर्मोनलाई दबाएर अर्को हर्मोनलाई सब्बल पार्ने प्रकृया

**हस्तमैथुन** masturbation ना. आफ्नो यौनाङ्ग चलाएर यौन आनन्द प्राप्त गर्ने विधि ; आफ्नो यौनाङ्गलाई चलाएर चरमानन्दको बिन्दु सम्म पुग्ने विधि

**हस्तयौन** handjob ना. कसैको शिश्नलाई हातले खेलाएर दिने यौनानन्द

**हाडनाता करणी** incest ना. हाडनाता वा पारिवारिक सम्बन्धबाट निकट पर्ने व्यक्तिहरूसँग गरिने यौन सम्पर्क ; ( हाडनाताका परिभाषा समाज र संस्कृति अनुसार फरक हुन सक्छ, जस्तै कतिपय समाजहरूमा ३/४ पुस्ता भित्रका सम्बधलाई हाडनाता मानिन्छ, कतिपय समाजहरूमा आफ्नो अभिभावकको जामेका सन्तानहरूसँग पनि विवाहिक सम्बन्ध राख्न सकिन्छ )

**हिजडा** hijraa ना. भारत, बाङ्लादेश र पाकिस्तानमा बसोबास गर्ने आफ्नै छुट्टै समाज र सामाजिक मूल्य मान्यता रीरि थिति भएका एक समुदाय जसमा विशेष गरी तेस्रोलिङ्गीहरू बस्छन्

**हिज्रा** हे. हिजडा

**हिन्दु तृतीयवादी** hindu trinarist ना. तृतियवादी नारामा हिन्दुवादी नारा, जस्तै सबै परिभाषाहरूलाई मनु स्मृति, माहाभारतमा आधारित मान्ने; अक्सर अरु धर्मावलम्बीहरूमा उस्तै खाले तेस्रोलिङ्गी अवधारणा छैन भनी होच्याउने, र अन्य धर्मावलम्बीहरू कट्टरपन्थी र संकीर्ण भनी दोष लगाउने; लिङ्गको धारणालाई पूरै हिन्दु धर्म ग्रथमा केन्द्रित पार्ने

**हिरादेवी** (मेटी भाषा) ना. दिसा

**हिलिलि** (मेटी भाषा) ना. हिजडा वा तेस्रोलिङ्गी

# अङ्ग्रेजी

**Ace** / एस् / (सां.) अयौनिक Asexual

**AFAB** / ए-फ्याब् / (सां.) Assigned Female at birth जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएको

**AMAB** / ए-म्याब् / (सां.) Assigned Male at birth जन्मँदा पुलिङ्गी इङ्गित गरिएको

**Arace** / ए-रेस् / (सां.) अप्रणयात्मक अयौनिक Aromantic asexual

**Brace** / ब्रेस् / (सां.) द्वप्रणयात्मक अयौनिक Biromantic asexual

**Enby** / एँबि / वा / एन्बि / (सां.) Non-binary

**Femxle** / फेमुक्स् / अङ्ग्रेजी भाषामा स्त्रीलिङ्गीका निम्ति प्रयोग गरिने शब्द female को महिलावादी भाषिक सुदृढिकरण

**FSW** / एफ-एस-डब्लु / (सां.) Female Sex Workers

**Grace** / ग्रेस् / (सां.) खैर्याउनिक Graysexual

**Hegina** / हिजाइना / [ he + vagina ] पुरुषको योनी ; पारलिङ्गी पुरुषको जैविक यौनाङ्गलाई जनाउन प्रयोग गरिने शब्द

**Hetrace** / हेट्-रेस् / (सां.) विषमप्रणयात्मक अयौनिक Heteroromantic asexual

**Homrace** / होम्-रेस् / (सां.) समप्रणयात्मक अयौनिक Homoromantic asexual

**MOGAI** / मग्गी / (सां.) Marginalized Orientations (sexual/romantic), Gender Alignments (identity/expressions) and Intersex bodily variations

**MSM** / एम-एस-एम / (सां.) Men who have sex with men

**Prace** / प्रेस् / (सां.) सर्वप्रणयात्मक अयौनिक Panromantic asexual

**Shenis** / शिनस् / [ she + penis ] महिलाको शिश्न ; पारलिङ्गी महिलाको जैविक यौनाङ्गलाई जनाउन प्रयोग गरिने शब्द

**SWERF** / स्वर्फ् / (सां.) Sex Worker Exclusionary Radical Feminist हे. यौनकर्मी वहिष्कारी कट्टरपन्थी महिलावादी

**TERCO** / टर्को / (सां.) Trans Exclusionary Radical Cisgender woman हे. पारलिङ्गी वहिष्कारी कट्टरपन्थी त्याचलिङ्गी महिला

**TERF** / टर्फ् / (सां.) Trans Exclusionary Radical Feminists हे. पारलिङ्गी वहिष्कारी कट्टरपन्थी महिलावादी

**Womxn** / वोमुक्स् / अङ्ग्रेजी भाषामा महिलाका निम्ति प्रयोग गरिने शब्द woman को महिलावादी भाषिक सुदृढिकरण ; (रङ्गभेदी दृष्टिकोण) अमेरिकी समजामा महिलाको निम्ति प्रयोग गर्ने शब्द woman लाई श्वेत महिला white woman सँग साटेर प्रयोग गरिन्थ्यो, अर्थात् woman मात्र भन्दा स्वतः white woman नै बुझिने सामाजिक-राजनीतिक भाष्यले अश्वेत महिलाहरूलाई अन्यकरण गर्दा woman शब्दमा प्रश्न चिन्ह उठ्न थालेको थियो ; (पितृसत्तात्मक दृष्टिकोण) भाषाले समाजको चित्रण गर्ने र भाषाको माध्यमबाट भाष्यको समर्थन हुने भएकाले अङ्ग्रेजी भाषाको व्याकरणात्मक लिङ्गमा पुरुष जनाउने शब्दहरू प्रमुख रहने र त्यसमा उपसर्ग प्रत्यय थपेर महिलालाई जनाइने, पुरुष केन्द्रित भाषा प्रति महिलावादी आन्दोलनको सुदृद्धिकरण ; (असमावेशी दृष्ट्कोण ) woman भन्न बित्तिकै

त्याचलिङ्गी महिलाहरूलाई मात्र जनाइने र पारलिङ्गी महिलाहरूलाई महिलाकै रूपमा नगन्ने, अझै कतिपयले त गैर-विषमयौनिक महिलाहरूलाई पनि woman महिला नगन्ने भएकाले समावेशी शब्दको खोजी

# अतिरिक्त

| पुरुषत्व बोधक | महिलात्व बोधक | गैर-द्वयसांखिक बोधक | लैङ्गिक तटस्थ |
|---|---|---|---|
| Father | Mother | Famo | Parent |
| Daddy | Mommy | Maddy/Muddy/Moddy | Parent |
| Papa | Mumma | Zaza | Parry |
| Baba | Mama | Bama | Nana |
| Uncle | Aunt | Entle | Paresib |

| | | | |
|---|---|---|---|
| Brother | Sister | Broster | Sibling / Sib |
| Brother-in law | Sister-in law | Broster-in law | Sibling-in law |
| Nephew | Niece | Phewece | Nibling |
| Son | Daughter | Soter | Child |
| Grandpa / Grandfather | Grandma/ Grand mother | Grandza | Grandparent |
| Grandson | Granddaughter | Grandsoter | Grandchild |
| Boy | Girl | Bril / Bychild | Child |
| Boyfriend | Girlfriend | Birlfriend /Feyfriend | Datemate / Lover |
| Husband | Wife | Hife / Bypox | Spouse / the other half / Epox |
| Conso | Consi | Conni | Cousin |
| Chairman | Chairwoman | Chairby | Chairperson |
| King | Queen | Kieen | Monarch |
| Prince | Princess | Prinby | Monald |

# नेपालभाषा

| | | |
|---|---|---|
| Biological sex | यचिं | जैविक लिङ्ग |
| Endosex | त्याज्यू यचिं | आन्तर्लिङ्गी |
| Male sex | बायचिं | पुलिङ्गी |
| Female sex | मायचिं | स्त्रीलिङ्गी |
| Intersex | त्यामज्यू यचिं | अन्तर्लिङ्गी |
| MTF/FTM | यचिं ह्यू (म्ह/पिं) | यौनाङ्ग परिवर्तन गरेका |
| Gender | जाः, जात | लैङ्गिकता |
| Gender identity | जाः म्हसिका | लैङ्गिक पहिचान |
| Man | मिजं, बाजाः | पुरुष |
| Woman | मिसा, माजाः | महिला |
| Cisgender | थातंजाः | त्याचलिङ्गी |
| Transgender | ब्याग्जाः | पारलिङ्गी |
| Transman | ब्याग्जाः मिजं, ब्याग्मिजं, ब्याग्भाजु, ब्याग्बौचा | पारलिङ्गी पुरुष |
| Transwoman | ब्याग्जाः मिसा, ब्याग्मिसा, ब्याग्मैंचा, ब्याग्मयेजु | पारलिङ्गी महिला |
| Agender | गुलिजाः | अलिङ्गी |
| Androgyne | ल्वाक्जाः | मिश्रितलिङ्गी |
| Bigender | निजाः, निजाःमि | दुईलिङ्गी |
| Gender fluid | हुस्लुंजाः | तरल लैङ्गिकता भएका, द्रवलिङ्गी |

| | | |
|---|---|---|
| Transsexual | अःजाःमि | विषुलिङ्गी |
| Transvestite | अःजाःपुँमि | विषुपहिरणी |
| Gender non-conforming | जाः त्याछीम्हां(म्ह/पिं) | गैरानुरूपलिङ्गी |
| Non-binary | निथीजाःपिलाः | गैर-द्वयसांखिक |
| Gender queer | क्वयरजाः | क्वयेरलिङ्गी, लैङ्गिक क्वयेर |
| Demigender | बापाजाः | अर्धलिङ्गी |

| | | |
|---|---|---|
| Sexuality | यसु | यौनिकता |
| Sexual orientation | यचा क्वसाः | यौन अभिमुखिकरण |
| Heterosexual/Straight | बिज्वःयचा | विषमयौनिक |
| Homosexual(Gay/Lesbian) | ज्वःयचा | समयौनिक |
| Bisexual | ज्वःबिज्वःयचा | द्वयौनिक |
| Pansexual | दोखुनुयचा | सर्वयौनिक |
| Polysexual | गत्केयचा | बहुयौनिक |
| Sexual Fluid | हुस्लुंयचा | द्रवयौनिक |
| Androsexual | बाजाःयचा | पुरुष्याउनिक |
| Gynesexual | माजाःयचा | महिल्याउनिक |
| Skoiliosexual | निथीजाःपिलाःयचा | गैरद्वयसांख्याउनिक |
| Trans-attracted | ब्याग्जाःयचा | पारलिङ्यौनिक |
| Asexual | गुलियचा | अयौनिक |
| Graysexual | ब्वायचा | खैर्याउनिक |
| Questioning | यसु न्ह्यसःमि | केथायौनिक |